ग्रन्थको नाम : श्रीकृष्णाय वयन्नुमः
लेखक : श्रीशरत्कुमार भट्टराई



प्रकाशक : श्रीराजर्षिजनकस्मृतिकोष
विजयचोक, प्रयागमार्ग
बत्तीसपुतली–९
काठमाडौं, नेपाल
फोन : ४११००५८

प्रकाशन मिति : वि.सं. २०६९ पुत्रदा एकादशी

प्रकाशित सङ्ख्या : ३०० प्रति

मूल्य : रू. १५०।–

कम्प्युटर सेटिङ्ग : श्रीखड्गप्रसाद खनाल

मुद्रक : एलायन्स प्रिन्टर्स एण्ड मिडिया हाउस प्रा.लि.
विमासमिति मार्ग, सरस्वतीनगर

# समर्पण

परमसत्यस्वरूप भगवान् श्रीकृष्णमा
यो कृति म समर्पण गर्दछु ।

# प्रकाशकको भनाइ

यस कोषले आफ्नो स्रोत र साधनले भ्याएसम्म आध्यात्मिक विषयका अझ त्यसमा पनि विशेषरूपमा भक्ति र ज्ञानका विषयमा विभिन्न विद्वान् लेखकहरूले लेख्नुभएका ग्रन्थहरूको प्रकाशन गर्दै आएको छ । यसैक्रममा श्रीशरत्कुमार भट्टराईले लेख्नुभएका केही ग्रन्थहरू पनि कोषले प्रकाशन गर्दै आएको छ । ती कृतिहरूमध्ये २०६३ सालमा ज्ञान र भक्ति, २०६४ सालमा रासपञ्चाध्यायी, २०६५ सालमा ब्रह्मसाक्षात्कार, २०६७ सालमा ब्रह्मसूत्रसार र उपनिषत्सार, २०६९ सालमा परमसत्य र श्रीकृष्णाय वयन्नुमः समेत ग्रन्थहरू प्रकाशन गर्न पाएकोमा कोषलाई खुशी लागेको छ ।

यो श्रीकृष्णाय वयन्नुमः ग्रन्थ जिज्ञासु मुमुक्षुहरूका लागि अत्यन्त पठनीय हुनेछ भन्ने यस कोषले ठानेको छ । किनभने यसमा जिज्ञासु मुमुक्षुहरूले जान्नुपर्ने विभिन्न ज्ञान र भक्तिपरक श्लोकहरूको सरल, सरस तथा सुसंस्कृत नेपाली भाषामा लेखकले समछन्दमा अनुवाद गर्नुभएको छ । यसको अध्ययनबाट जिज्ञासु पाठकहरूले आफ्नू पिपासा समन गर्न समर्थ हुनुहुनेछ भन्ने आशा गर्न सकिन्छ । यस्ता महत्त्वपूर्ण ग्रन्थहरूको प्रकाशनको अभिभारा यस कोषले लेखकबाट पाएकोमा यो कोष लेखकप्रति हार्दिक कृतज्ञता प्रकट गर्दछ । अतः यो ग्रन्थ सबैका लागि सङ्ग्रहणीय र पठनीयसमेत हुनेछ भन्ने कोषले ठानेको छ । ॐ ब्रह्मार्पणमस्तु ।

वि.सं. २०६९ पुत्रदा एकादशी — श्रीराजर्षिजनकस्मृतिकोष

# मेरो भन्नु

आफ्नै कृतिका बारेमा आफ्ना भनाइ मैले राखेको यो २८ औँ पटक भएछ । समीक्षात्मक कृतिबाट मैले २०२६ सालबाट शुरु गरेको ग्रन्थ लेखन र प्रकाशनको काम आज २०६९ सालमा आइपुग्दा ४३ वर्ष भएछ । यस अन्तरालमा मैले आफ्नू व्यस्तताका बीचमा समय निकालेर समीक्षा, काव्य, गीतिकाव्य, कवितासङ्ग्रह, अनुवाद, भक्ति, ज्ञान र अद्वैत दर्शन लगायतका २८ ओटा ग्रन्थहरू लेखेर प्रकाशन गरिसकेको छु । त्यसैकारण नै मैले आजसम्मका २८ प्रकारका भूमिका लेखिसकेको छु । वस्तुतः लेख्तालेख्तै मैले लेख्नुपर्ने कुरा नै समाप्त भएजस्तो मलाई लागेको छ ।

यस कविता सङ्ग्रहमा २१ ओटा केही अनुदित र केही मौलिक कविताहरू समाविष्ट छन् । जसमा प्रायजसो श्रीमद्भागवतबाट केही महत्त्वपूर्ण श्लोकहरू लिएर समछन्दमा अनुवाद गरिएको छ । त्यसैगरेर केही कविताहरू उपनिषद्का मन्त्रहरूको सार लिएर, केही श्लोकहरू श्रीमधुसूदन सरस्वतीका श्लोकहरूको समछन्दमा अनुवाद गरेर, केही कविताहरू विभिन्न फुटकर श्लोकहरूको अनुवाद गरेर र केही मौलिक कविताहरू पनि समावेश गरेर यो सङ्ग्रह प्रकाशन गरिएको हो ।

केही वर्षदेखि लौकिक साहित्य, काव्य, कविता, अनुदित श्लोकहरू लेख्ने काम क्रमशः घटाउँदै लगेर हाल म अद्वैत वेदान्तका केही प्रकरण ग्रन्थहरूको सार र अरू केही ग्रन्थहरूको

नेपालीमा अनुवाद गरेर प्रकाशन गर्ने काम गरिरहेको छु । लौकिक साहित्यको लेखन बिस्तारै छोडेर ज्ञान र भक्तिपरक ग्रन्थहरूको लेखनमा मैले हाल आफूलाई समर्पित गरेको छु । फलतः श्रीमद्भागवत महापुराण भित्रका केही श्लोकहरूको समछन्दमा र केहीको विषमछन्दमा अनुवाद गरेर २०६३ सालमा ज्ञान र भक्ति, त्यसपछि २०६४ सालमा रासपञ्चाध्यायी, २०६५ सालमा ज्ञान र भक्तिपरक निबन्ध सङ्ग्रह ब्रह्मसाक्षात्कार, २०६९ सालमा परमसत्य नामक निबन्ध सङ्ग्रह र यो अनुदित कविता सङ्ग्रह श्रीकृष्णाय वयन्नुमः समेत पाठक समक्ष आउन सकेका हुन् । यो क्रम अगाडि पनि चल्दै जाने छ । ॐ ब्रह्मार्पणमस्तु ।

२०६९ पुत्रदा एकादशी                    शरत्कुमार भट्टराई

# विषयसूची

# श्रीकृष्णाय वयन्नुमः

## १. मङ्गलाचरण

जन्माद्यस्य यतोऽन्वयादितरतश्चार्थेष्वभिज्ञः स्वराट्,
तेने ब्रह्म हृदा य आदिकवये मुह्यन्ति यत्सूरयः ।
तेजोवारिमृदां यथा विनिमयो यत्र त्रिसर्गोऽमृषा,
धाम्ना स्वेन सदा निरस्तकुहकं सत्यं परं धीमहि ॥

जो सत् अन्वय कार्यमा इतरमा टाढा भई बस्त छ ।
जल्ले ज्ञान दियो ती आदि कविमा ज्ञानी सधैँ छक्क छ ।
सारा भास्तछ सृष्टि सत्य सरहै सम्पूर्ण सत्ता उही
माया गर्दछ नाश चित्स्वरूपले सत्यं परं धीमहि

❀

धर्मः प्रोज्झितकैतवोऽत्र परमो निर्मत्सराणां सतां
वेद्यं वास्तवमत्र वस्तु शिवदं तापत्रयोन्मूलनम् ।
श्रीमद्भागवते महामुनिकृते किं वा परैरीश्वरः
सद्यो हृद्यवरुध्यतेऽत्र कृतिभिः शुश्रूषुभिस्तत्क्षणात् ॥

यो हो उत्तम पात्रबाट बुझिने सद्ब्रह्मको वर्णन
यो हो मोक्षद शास्त्र ताप सब नै जो गर्छ उन्मूलन ।
जो जो निष्पृह भै सुशान्त मनले सत्शास्त्र यो सुन्दछन्
आई श्रीहरि शुद्ध सो हृदयमा बन्दी भई बस्तछन् ॥

❁

निगमकल्पोतरोर्गलितंफलं
शुकमुखादमृतद्रवसंयुतम् ।
पिबत भागवतं रसमालयं
मुहुरहोरसिका भुवि भावुकाः ॥

निगमका रुखमा रसिलो फल,
ठुँग दिँदा शुकले चुहुँदो तल ।
पिउन लायक यो नमरेतक,
पिइरहू रस यो भुवि भाबुक ॥

❁

भूतैर्महद्भिर्य इमा पुरो विभु–
र्निर्माय शेते यदमूषु पूरुषः ।
भुङ्क्ते गुणान् षोडश शोडशात्मकः
सोऽलङ्कृषीष्ट भगवान् वचांसि मे ॥

यी पाँच महाभूतले शरीर
बनाइ यस्मै जीव भै पसेर ।
सोह्रै कला साथ लिएर नाथ !
बस्छौ र ऐले बस बोलिसाथ ॥

❁

योऽन्तः प्रविश्य मम वाचमिमां प्रसुप्तां
सञ्जीवयत्यखिल शक्तिधरः स्वधाम्ना ।
अन्यांश्च हस्तचरणश्रवणत्वगादीन्
प्राणान्नमो भगवते पुरुषाय तुभ्यम् ॥

आफैँ पसी हृदयका तह भित्रसम्म,
शक्ति प्रसारण गरी सर्वतर्फ टम्म ।
दिन्छौ प्रसुप्त जड वाक्कन शक्ति नाथ !
गर्छु प्रणाम भगवन् ! अति भक्ति साथ ॥

❁

# २. मलप्रक्षालन

एवं स भगवान् कृष्णो वृन्दावनचरः क्वचित् ।
ययौ राममृते राजन् कालिन्दीं सखिभिर्वृतः ॥

वृन्दावन सधैँ घुम्ने श्रीकृष्ण राम नै न ली ।
जानुभो यमुनातर्फ साथमा ग्वालबाल ली ॥

अथ गावश्च गोपाश्च निदाघातपपीडिताः ।
दुष्टं जलं पपुस्तस्यास्तृषार्ता विषदूषितम् ॥

थियो त्यो ग्रीष्मको घाम तिर्खाइ गोप गौ सब ।
विषाक्त यमुनाजीको पिए पानी गई तब ॥

विषाम्भस्तदुपस्पृश्य दैवोपहतचेतसः ।
निपेतुर्व्यसवः सर्वे सलिलान्ते कुरूद्वह ॥

राजन् ! दुर्भाग्यले गर्दा विषाक्त यमुनाजल ।
पिई मर्दा भए सारा यमुनातटका तल ॥

वीक्ष्य तान् वै तथा भूतान् कृष्णो योगेश्वरेश्वरः ।
ईक्षयामृतवर्षिण्या स्वनाथान् समजीवयत् ॥

देखेर कृष्णले यस्तो जो हुन् योगेश्वरेश्वर ।
बर्साई नेत्रपीयूष बचाए सब सत्वर ॥

❁

ते सम्प्रतीतस्मृतयः समुत्थाय जलान्तिकात् ।
आसन् सुविस्मिताः सर्वे वीक्षमाणाः परस्परम् ॥

ब्यूँझिएर उठे सारा उभिए अनि सत्वर ।
आश्चर्यमा परी थाले सबै हेर्न परस्पर ॥

❁

अन्वमंसत तद् राजन् गोविन्दानुग्रहेक्षितम् ।
पीत्वा विषं परेतस्य पुनरुत्थानमात्मनः ॥

अन्त्यमा उनले जाने विषैलो जल जो पिई ।
मरेथे कृष्णले फेरि बचाए दृष्टि जो दिई ॥

❁

विलोक्य दूषितां कृष्णां कृष्णः कृष्णाहिना विभुः ।
तस्या विशुद्धिमन्विच्छन् सर्पं तमुदवासयत् ॥

यमुनाजल देखेर प्रदूषित भयङ्कर ।
कृष्णले गर्नु भो त्यस्को निकालावास बाहिर ॥

❀

कथमन्तर्जलेऽगाधे न्यगृह्णाद् भगवानहिम् ।
स वै बहुयुगावासं यथाऽऽसीद् विप्र कथ्यताम् ॥

युगौंदेखि बसेको त्यो सर्पको हरिले किन ?
गहिरो जलका भित्र गर्नु भो मानमर्दन ॥

❀

ब्रह्मन् भगवतस्तस्य भूम्नः स्वच्छन्दवर्तिनः ।
गोपालोदारचरितं कस्तृप्येतामृतं जुषन् ॥

गोपालकृष्ण हुन् ब्रह्मन् ! आत्मतन्त्र परात्पर ।
सुनी अमृतझैँ मीठो लीला को तृप्त हुन्छ र ?

❀

कालिन्द्यां कालियस्यासीद्ध्रदःकश्चिद् विषाग्निना ।
श्रप्यमाणपया यस्मिन् पतन्त्युपरिगाः खगाः ॥

यमुनाह्रदका भित्र थियो कालियको घर ।
त्यहीँ बसेर नै छोड्थ्यो आफ्नू विष भयङ्कर ॥

विषले जल उम्लन्थ्यो दन्कन्थ्यो अग्नि दन्दन ।
त्यहाँ माथि उडे पक्षी खस्तथे भस्म भैकन ॥

❀

विप्रुष्मता विषोदोर्मिमारुतेनाभिमर्शिताः ।
म्रियन्ते तीरगा यस्य प्राणिनः स्थिरजङ्गमाः ॥

हावा बहन्थ्यो बोकेर विषाक्त जलका कण ।
तिनकै स्पर्शले मर्थे स्थिरजङ्गम तत्क्षण ॥

❀

तं चण्डवेगविषवीर्यमवेक्ष्य तेन
दुष्टां नदीं च खलसंयमनावतारः ।
कृष्णः कदम्बमधिरुह्य ततोऽतितुङ्ग-
मास्फोटच गाढरशनो न्यपतद् विषोदे ॥

देखेर कृष्ण विष कालियको समस्त,
पानी थियो जहरिलो विष भै प्रशस्त ।
त्यस्को गरी दमन पार्न विशुद्ध पानी,
सङ्कल्प गर्नु पनि भो अति योग्य ठानी ।
ठोकेर ताल हरिले पटुका कसेर,
हाम्फाल्नुभो कदमको रुखमा चढेर ॥

❀

सर्पह्रदः पुरुषसारनिपातवेग–
सङ्क्षोभितोरगविषोच्छ्वसिताम्बुराशिः ।
पर्यक्प्लुतो विषकषायविभीषणोर्मि–
र्धावन् धनुःशतमनन्तबलस्य किं तत् ॥

पैल्यै थियो जल विषाक्त अतीव फेरि,
उम्ली प्रसारण थियो सबतर्फ घेरी ।
हाम्फाल्नुभो हरि जसै रुखमाथिबाट,
झन् उम्लियो जल झिकी प्रलयाग्नि छाँट ।
आफैँ पसे हरि भने न हुने छ के र ?
हुन् आत्मतन्त्र भगवान् नभनौँ म धेर ॥

तस्य ह्रदे विहरतो भुजदण्डघूर्ण–
वार्घोषमङ्ग वरवारणविक्रमस्य ।
आश्रुत्य तत् स्वसदनाभिभवं निरीक्ष्य
चक्षुःश्रवाः समसरत्तदमृष्यमाणः ॥

श्रीकृष्णले अति बलिष्ठ भुजा बजारी,
थाले जसै गजसरी जल फाल्न भारी ।
निस्क्यो असह्य रव कालिय नाग जाग्यो,
साह्रै रिसाइ हरिका तिर जाइलाग्यो ॥

तं प्रेक्षणीयसुकुमारघनावदातं
श्रीवत्सपीतवसनं स्मितसुन्दरास्यम् ।
क्रीडन्तमप्रतिभयं कमलोदराङ्घ्रिं
सन्दश्य मर्मसु रुषा भुजया चछाद ॥

अत्यन्त नै मधुर सुन्दर कृष्ण मस्त
बन्दै, विषाक्त दह्मा जलकेलि सुस्त ।
गर्दै थिए, सकल यो प्रभुकार्य देखी,
आयो रिसाइकन कालिय झार्न शेखी ।
बेर्‍यो समस्त तनमा अनि डस्न थाल्यो,
ताकेर मर्म सबमा विष खूब हाल्यो ॥

तं नागभोगपरिवीतमदृष्टचेष्ट–
मालोक्य तत्प्रियसखाः पशुपा भृशार्ताः ।
कृष्णेऽर्पितात्मसुहृदर्थकलत्रकामा
दुःखानुशोकभयमूढधियो निपेतुः ॥

ती नागको सुदृढ बन्धनमा परेर,
निश्चेष्टझैँ हरि भए पथरा परेर ।
देखे जसै अगम दृश्य भई अनाथ,
मूर्च्छा परे सकल बालक एकसाथ ॥

गावो वृषा वत्सतर्यः क्रन्दमानाःसुदुःखिताः ।
कृष्णे न्यस्तेक्षणा भीता रुदत्य इव तस्थिरे ॥

गाई बाछा कराएर भए अत्यन्त दुःखित ।
हेर्दै कृष्ण  सबै रोए भए साह्रै अचम्भित ॥

❀

अथ व्रजे महोत्पातास्त्रिविधा ह्यतिदारुणाः ।
उत्पेतुर्भुवि दिव्यात्मन्यासन्नभयशंसिनः ॥

देहमा व्योमधर्तीमा नराम्रा सूचनाहरू ।
देखिए यिनले होलान् उत्पात व्रजमा शुरु ॥

❀

तानालक्ष्य भयोद्विग्ना गोपा नन्दपुरोगमाः ।
विना रामेण गाः कृष्णं ज्ञात्वा चारयितुं गतम् ॥

नन्दगोपादिले देखे नराम्रा सब लक्षण ।
बुझ्के श्रीराम छोडेर गएका कृष्णजी वन ॥

❀

तैर्दुर्निमित्तैर्निधनं मत्वा प्राप्तमतद्विदः ।
तत्प्राणास्तन्मनस्कास्ते दुःखशोकभयातुराः ॥

नजानी कृष्णको शक्ति मरे कृष्ण भनीकन।
आत्तिए सबका यौटै थिए श्रीकृष्ण नै धन॥

❁

आबालवृद्धवनिताः सर्वेऽङ्ग पशुवृत्तयः।
निर्जग्मुर्गोकुलाद् दीनाः कृष्णदर्शनलालसाः॥

आबालवृद्ध नारी ती गाई जस्तै सुधा थिए।
कृष्ण भेट्न भनी सारा व्रजबाट हिँडी दिए॥

❁

तांस्तथा कातरान् वीक्ष्य भगवान् माधवो बलः।
प्रहस्य किञ्चिन्नोवाच प्रभावज्ञोऽनुजस्य सः॥

आत्तिँदै सब दौडेका देखेर बलराम ती।
हाँसेर चुप लागे जो जान्दथे कृष्णको गति॥

❁

तेऽन्वेषमाणा दयितं कृष्णं सूचितया पदैः।
भगवल्लक्षणैर्जग्मुः पदव्या यमुनातटम्॥

व्रजवासी गए हेर्दै जता ती कृष्णजी गए।
कालिन्दीतटकातर्फ गएका पाउ देखिए॥

❁

ते तत्र तत्राब्जयवाङ्कुशाशनि–
ध्वजोपपन्नानि पदानि विश्पतेः ।
मार्गे गवामन्यपदान्तरान्तरे
निरीक्षमाणा ययुरङ्ग सत्वराः ॥

श्रीपाउका चिह्न यवाङ्कुशाशनि,
ध्वजाब्ज साथै अरू पाइला पनि ।
देखेर हेर्दै पद ती जता गए
हतारिँदै गोपहरू उतै गए ॥

❀

अन्तर्ह्रदे भुजगभोगपरीतमारात्
कृष्णं निरीहमुपलभ्य जलाशयान्ते ।
गोपांश्च मूढधिषणान् परितः पशूंश्च
संक्रन्दतः परमकश्मलमापुरार्ताः ॥

त्यो नागले फनफनी दह भित्र घेरी,
निश्चेष्ट नै गरिदियो हरिलाइ बेरी ।
मूर्च्छा थिए तट हुँदो कति गोप गाई,
बाँकी थिए व्यथित नै बहुतै कराई ।
टाढै हुँदा सकल गोप अनिष्ट देखी,
मूर्च्छा परे तब उपाय कुनै नदेखी ॥

❀

गोप्योऽनुरक्तमनसो भगवत्यनन्ते
तत्सौहृदस्मितविलोकगिरः स्मरन्त्यः ।
ग्रस्तेऽहिना प्रियतमे भृशदुःखतप्ताः
शून्यं प्रियव्यतिहृतं ददृशुस्त्रिलोकम् ॥

गोपाङ्गना जति थिए सब कृष्णभक्त,
सारा समर्पित थिए चरणानुरक्त ।
देखी उनै प्रिय सुहृत् अहिबाट दष्ट,
सम्पूर्ण शून्य हुन गो अनि तीव्र कष्ट ॥

ताः कृष्णमातरमपत्यमनुप्रविष्टां
तुल्यव्यथाः समनुगृह्य शुचः स्रवन्त्यः ।
तास्ता व्रजप्रियकथाः कथयन्त्य आसन्
कृष्णाननेऽर्पितदृशोमृतकप्रतीकाः ॥

श्रीकृष्णका विरहले जननी कराई,
दौडिन् उनी दहतिरै सुत भेट्नलाई ।
गोपीहरू अघि सरी उनलाइ रोके,
उस्तै थियो विरह तै पनि भित्र बोके ।
गोपीहरू अधिक आखिरमा गएर,
मूर्च्छा परी सुतिरहे शवझैँ भएर ।
बाँकी थिए जति सचेत सबै भएर,
थाले सुनाउन कथा हरिकै गएर ।

झारेर आँसु हरिकै मुखतर्फ हेरी,
थाले फुल्याउन यशोमतिलाइ घेरी ॥

❀

कृष्णप्राणान्निर्विशतो नन्दादीन् वीक्ष्य तं ह्रदम् ।
प्रत्यषेधत् स भगवान् रामः कृष्णानुभाववित् ॥

कृष्ण नै प्राण संझेका नन्दगोपहरूकन ।
बलले रोक्नुभो जान दहकातर्फ तत्क्षण ॥

❀

इत्थं स्वगोकुलमनन्यगतिं निरीक्ष्य
सस्त्रीकुमारमतिदुःखितमात्महेतोः ।
आज्ञाय मर्त्यपदवीमनुवर्तमानः
स्थित्वा मुहूर्तमुदतिष्ठदुरङ्गबन्धात् ॥

देखेर चिन्तित सबै व्रजका निवासी,
मैमात्र हूँ सकलको हृदयाधिवासी ।
भन्ने बुझी नरपना क्षणमै समस्त,
छोडेर निस्कनु भयो अहिबाट सुस्त ॥

❀

तत्प्रथ्यमानवपुषा व्यथितात्मभोग-
स्त्यक्त्वोन्नमय्य कुपितः स्वफणान् भुजङ्गः ।
तस्थौ श्वसञ्छ्वसनरन्ध्रविषाम्बरीष-
स्तब्धेक्षणोल्मुकमुखो हरिमीक्षमाणः ॥

श्रीकृष्णले स्वतनु खूब फुलाउँदामा,
त्यो नाग भो व्यथित थप्पड पाउँदामा ।
छोडेर कृष्ण पर गै हरितर्फ ताकी,
फुङ्कार साथ ठडियो अति रोष राखी ।
हेरेर कृष्णतिर लाल गरेर नेत्र,
नासाग्रले विष छरीकन यत्रतत्र ।
आगो झिकी वदनबाट फणा उठाई,
त्यो ताकमा रहन गो हरि डस्नलाई ॥

✿

तं जिह्वया द्विशिखया परिलेलिहानं
द्वे सृक्किणी ह्यतिकरालविषाग्निदृष्टिम् ।
क्रीडन्नमुं परिससार यथा खगेन्द्रो
बभ्राम सोऽप्यवसरं प्रसमीक्षमाणः ॥

त्यो नाग लप्लप दुई रसना निकाल्थ्यो,
चाटेर ओठ रिसले विषअग्नि फाल्थ्यो ।

श्रीकृष्णवाहन गरुत्मतलाई जस्तै,
त्यो नागसाथ पनि खेल्नु भयो प्रशस्तै ।
हेरेर  दाउ कहिले अघि बढ्नु हुन्थ्यो,
यस्तै गरेर कहिले पछि सर्नु हुन्थ्यो ।
त्यस्तै गरी उरग कालिय दाउ हेरी,
सर्थ्यो यताउति घुमीकन ठाउँ फेरी ॥

❁

एवं परिभ्रमहतौजसमुन्नतांस–
मानम्य तत्पृथुशिरःस्वधिरूढ आद्यः ।
तन्मूर्धरत्ननिकरस्पर्शातिताम्र–
पादाम्बुजोऽखिलकलादिगुरुर्ननर्त ॥

यसै गरी उरगको बलवीर्यलाई,
नाशेर सुस्त उसको शिर नै झुकाई ।
उफ्रेर चढ्नु पनि भो हरि फूर्तिसाथ,
त्यस्का थिए अति विशाल अनेक माथ ।
राता थिए मणिहरू शिरमाथि टम्म,
श्रीकृष्णका चरण झन् रँगिए अचम्म ।
हुन् कृष्ण आदिगुरु नर्तनका कलामा,
नाचे विशालतम कालियका फणामा ॥

❁

तं नर्तुमुद्यतमवेक्ष्य तदा तदीय–
गन्धर्वसिद्धसुरचारणदेववध्वः ।
प्रीत्या मृदङ्गपणवानकवाद्यगीत–
पुष्पोपहारनुतिभिः सहसोपसेदुः ॥

श्रीकृष्णले जब गरे शुरु दिव्य नृत्य,
देखा परे गगनमा सब देवभृत्य ।
थाले बजाउन मृदङ्ग र ढोल आदि,
नाचे प्रफुल्लित भई हरि ती अनादि ।
वर्षा गरे सुमन सुन्दर गान गर्दै,
आए लिएर उपहार फुरुङ्ग पर्दै ॥

❀

यद् यच्छिरो न नमतेऽङ्ग शतैकशीर्ष्ण–
स्तत्तन् ममर्द खरदण्डधरोऽङ्घ्रिपातैः ।
क्षीणायुषो भ्रमत उल्बणमास्यतोऽसृङ्
नस्तो वमन् परमकश्मलमाप नागः ॥

त्यो नागका शिर थिए सय एक साथ,
नाचे सबैतिर घुमी शिरमाथि नाथ ।
झुक्तैन जौन शिर सो शिरतर्फ ताकी,
खाँद्दै गए चरणले नगरेर बाँकी ।

सारा भयो उरगको क्षय शौर्य ढाँट,
धारा बगे रगतका सब नाकबाट ।
दौड्यो ससम्भ्रम अशक्त निकै भएर,
मूर्च्छा पऱ्यो उरग आखिरमा गएर ॥

❁

तस्याक्षिभिर्गरलमुद्वमतः शिरस्सु
यद्यत् समुन्नमति निःश्वसतो रुषोच्चैः ।
नृत्यन् पदानुनमयन् दमयाम्बभूव
पुष्पैः प्रपूजित इवेह पुमान् पुराणः ॥

क्यै होशमा जब भयो शिर उच्च पारी,
थाल्थ्यो उगेल्न विष रोष गरेर भारी ।
हेर्दै घुमेर हरि कालिय नागलाई,
खेलाउँदै रहनु भो अति नै रमाई ।
गर्थ्यो खडा शिर जता उसमै चढेर,
मारेर ठक्कर झुकाउनु भो बढेर ।
निस्केर रक्तकण सुन्दर पाउलाई,
शोभा दिए अरुणपुष्पसरी रँगाई ॥

❁

तच्चित्रताण्डवविरुग्णफणातपत्रो
रक्तं मुखैरुरु वमन् नृप भग्नगात्रः ।

स्मृत्वा चराचरगुरुं पुरुषं पुराणं
नारायणं तमरणं मनसा जगाम ॥

श्रीकृष्णले अतुल ताण्डव नृत्य गर्दै,
पारे धुजा उरगका शिर ती निचोर्दै ।
सर्वाङ्ग भो शिथिल जर्जर चूर्ण चूर्ण,
वान्ता गरी रगत कालिय भो विदीर्ण ।
सम्झ्यो चराचरगुरु प्रभु कृष्णलाई,
जाँदोभयो शरणमा मनले चिताई ॥

कृष्णस्य गर्भजगतोऽतिभरावसन्नं
पार्ष्णिप्रहारपरिरुग्णफणातपत्रम् ।
दृष्ट्वाहिमाद्यमुपसेदुरमुष्य पत्न्य
आर्ताः श्लथद्वसनभूषणकेशबन्धाः ॥

श्रीकृष्णका उदरमा सब विश्व बस्छ,
ती कृष्ण नै शिर चढे कति बेर टिक्छ ।
त्यो नागको तन भयो अति नै विशीर्ण,
सारै पदाहत हुँदा शिर भो विदीर्ण ।
पत्नीहरू उरगको सब हाल देखी,
पूरै भए व्यथित पूर्ण झरेर शेखी ।

खुस्क्यो जुरो वसन भूषण झर्न थाले,<br>
सारै भई शिथिल होसहवास फाले ॥

❀

तास्तं सुविग्नमनसोऽथ पुरस्कृतार्भाः<br>
कायं निधाय भुवि भूतपतिं प्रणेमुः ।<br>
साध्व्यः कृताञ्जलिपुटाः शमलस्य भर्तु-<br>
र्मोक्षेप्सवः शरणदं शरणं प्रपन्नाः ॥

ती नागिनी पति छुटाउन भीतिसाथ,<br>
बच्चाहरू अघि गरी अति भक्तिसाथ ।<br>
ठानेर विश्वभरिका हरि एक नाथ,<br>
आए परे शरणमा अति भै अनाथ ॥

❀

न्याय्यो हि दण्डः कृतकिल्बिषेऽस्मिं-<br>
स्तवावतारः खलनिग्रहाय ।<br>
रिपोः सुतानामपि तुल्यदृष्टे-<br>
र्धत्से दमं फलमेवानुशंसन् ॥

पापीहरू दण्डित गर्न नाथ !<br>
आयौ तिमी यो अवतार साथ ।

समान दृष्टि सबसाथ राखी,
कल्याण गर्छौ कटुता नराखी ॥
❁

अनुग्रहोऽयं भवतः कृतो हि नो
दण्डोऽसतां ते खलु कल्मषापहः ।
यद् दन्दशूकत्वममुष्य देहिनः
क्रोधोऽपि तेऽनुग्रह एव सम्मतः ॥

पापी थिए यी पति देव पैले,
यी जन्मिए सर्प भएर ऐले ।
दियौ तिमीले जुन यो फसाद,
क्रोधै भए ता पनि हो प्रसाद ॥
❁

तपः सुतप्तं किमनेन पूर्वं
निरस्तमानेन च मानदेन ।
धर्मोऽथ वा सर्वजनानुकम्पया
यतो भवांस्तुष्यति सर्वजीवः ॥

राम्रो गरे छन् कुन काम पैले,
पाए त्यसैको फल नाथ ! ऐले ।
त्यसै हुनाले प्रभु छौ प्रसन्न,
छौ अन्तरात्मा सब भित्र टन्न ॥
❁

कस्यानुभावोऽस्य न देव विद्महे
तवाङ्घ्रिरेणुस्पर्शाधिकारः ।
यद्वाञ्छया श्रीर्ललनाऽऽचरत्तपो
विहाय कामान् सुचिरं धृतव्रता ॥

हे नाथ ! कस्तो तपले गरीकन,
पाए यिनीले प्रभुपादको कण ।
लक्ष्मी स्वयं नै व्रत आदिले पनि,
खोज्छिन् सधैँ त्यो रज दीनझैँ बनी ॥

❀

न नाकपृष्ठं न च सार्वभौमं
न पारमेष्ठ्यं न रसाधिपत्यम् ।
न योगसिद्धीरपुनर्भवं वा
वाञ्छन्ति यत्पादरजःप्रपन्नाः ॥

हे नाथ ! जो छन् प्रभुपादभक्त,
हुन्छन् सधैँ नै प्रभुमा सुरक्त ।
न स्वर्ग खोज्छन् न रसाधिपत्य,
न चक्रवर्तित्व न लोक सत्य ।
न मोक्ष खोज्छन् न त योग सिद्धि,
खोज्छन् न ती वैभव वा समृद्धि ॥

❀

तदेष नाथाप दुरापमन्यै–
स्तमोजनिः क्रोधवशोऽप्यहीशः ।
संसारचक्रे भ्रमतः शरीरिणो
यदिच्छतः स्याद् विभवः समक्षः ॥

तमोगुणी कालिय दुष्ट जाति,
क्रोधी यिनी छन् बहुतै न जाती ।
जस्तै भए ता पनि पाउको रज,
पाए कहाँ पाउँदछन् स्वयं अज ।
हे नाथ ! तिम्रो शुभदृष्टि जो पर्‍यो,
ऐश्वर्य के ? त्यो भवसिन्धु नै तर्‍यो ॥

नमस्तुभ्यं भगवते पुरुषाय महात्मने ।
भूतावासाय भूताय पराय परमात्मने ॥

भगवन् ! प्रभुमा लागोस् नमस्कार निरन्तर ।
आत्मा हौ सब प्राणीका तिमी व्याप्त सबैतिर ॥

ज्ञानविज्ञाननिधये ब्रह्मणेऽनन्तशक्तये ।
अगुणायाविकाराय नमस्तेऽप्राकृताय च ॥

ज्ञानविज्ञानका खानी ब्रह्म हौ शक्तिका घर ।
गुणातीत तिमीलाई गर्छौं नमः निरन्तर ॥

❁

कालाय कालनाभाय कालावयवसाक्षिणे ।
विश्वाय तदुपद्रष्ट्रे तत्कर्त्रे विश्वहेतवे ॥

तिमी क्षोभक हौ काल कालका पनि आश्रय ।
तिमी समयका साक्षी द्रष्टा स्रष्टा निराश्रय ॥

❁

भूतमात्रेन्द्रियप्राणमनोबुद्ध्याशयात्मने ।
त्रिगुणेनाभिमानेन गूढस्वात्मानुभूतये ॥

पञ्चभूत र तन्मात्रा प्राण इन्द्रिय चित्त हौ ।
मन बुद्धि सबै कृष्ण ! तिमी कारण कार्य हौ ।
त्रिगुणात्मक हो जीव अहं राख्तछ सर्वदा ।
त्यसैकारण देखिन्नौ बस्छौ गुप्त भई सदा ॥

❁

नमोऽनन्ताय सूक्ष्माय कूटस्थाय विपश्चिते ।
नानावादानुरोधाय वाच्यवाचकशक्तये ।

हे अनन्त प्रभो ! सूक्ष्म कूटस्थ हे विपश्चित ।
वाच्यवाचक हौ नाथ ! नानावादसमर्थित ॥

❁

नमः प्रमाणमूलाय कवये शास्त्रयोनये ।
प्रवृत्ताय निवृत्ताय निगमाय नमो नमः ॥

प्रमाणमूल हे कृष्ण ! तिमी हौ शास्त्रकारण ।
नमस्कार सधैँ गर्छौं तिमी हौ सर्वकारण ॥

❁

नमः कृष्णाय रामाय वसुदेवसुताय च ।
प्रद्युम्नायानिरुद्धाय सात्वतांपतये नमः ॥

नमस्कार छ हे कृष्ण ! पुत्र हे वसुदेवका ।
अनिरुद्ध तिमी राम प्रद्युम्न चार व्यूहका ॥

❁

नमो गुणप्रदीपाय गुणात्मच्छादनाय च ।
गुणवृत्त्युपलक्ष्याय गुणद्रष्टे स्वसंविदे ॥

अन्तःकरणका साक्षी तिमी बुद्धिप्रकाशक ।
त्यसैबाट तिमी हुन्छौ आच्छादित अकण्टक ॥

अन्तःकरणवृत्तिमा झल्कने ज्ञान मूर्ति  हे !
नमस्कार सधैँ गर्छौं स्वप्रकाशित मूर्ति हे !

❀

अव्याकृतविहाराय सर्वव्याकृतसिद्धये ।
हृषीकेश  नमस्तेऽस्तु मुनये मौनशीलिने ॥
मूलप्रकृतिका स्वामी तिमी संसारचालक ।
नमस्कार हृषीकेश ! तिमी मौन अवाचक !

❀

परावरगतिज्ञाय सर्वाध्यक्षाय ते नमः ।
अविश्वाय च विश्वाय तद्द्रष्टेऽस्य च हेतवे ॥

सानो ठूलो सबै जान्ने साक्षी हौ सबका तिमी ।
अपवाद र अध्यास द्रष्टा हौ यिनका तिमी ॥
ज्ञानस्वरूपले सारा भ्रान्तिको नाश गर्दछौँ ।
तिम्रै विवर्त हो सारा तिम्रै नमन गर्दछौँ ॥

❀

त्वं ह्यस्य जन्मस्थितिसंयमान् प्रभो
गुणैरनीहोऽकृत कालशक्तिधृक् ।
तत्तत्स्वभावान् प्रतिबोधयन् सतः
समीक्षयामोघविहार ईहसे ॥

हे नाथ ! बस्छौ गुणदेखि भै पर,
हौ काल गर्छौ लय सृष्टि यो तर ।
संस्कारबाटै सब जीव सिर्जित,
हुन्छन् छ लीला प्रभुको अकल्पित ॥

❀

तस्यैव तेऽमूस्तनवस्त्रिलोक्यां
शान्ता अशान्ता उत मूढयोनयः ।
शान्ताः प्रियास्ते ह्यधुनावितं सतां
स्थातुश्च ते धर्मपरीप्सयेहतः ॥

त्रिलोकमा छन् प्रभुकै स्वयोनि,
शान्ता अशान्ता अनि मूढ योनि ।
तथापि तिम्रो प्रिय सत्त्व नै हो,
जन्म्यौ तिमी रक्षण गर्न नै हो ॥

❀

अपराधः सकृद्भर्त्रा सोढव्यः स्वप्रजाकृतः ।
क्षन्तुमर्हसि शान्तात्मन् मूढस्य त्वामजानतः ॥

शान्तात्मन् ! दासको भूल सहनै पर्छ नाथले ।
मूढ हुन् अपराधी हुन् चिनेन् यी अनाथले ॥

❀

अनुगृह्णीष्व भगवन् प्राणांस्त्यजति पन्नगः ।
स्त्रीणां नः साधुशोच्यानां पतिः प्राणः प्रदीयताम् ॥

मर्नै लाग्यो प्रभो ! सर्प नारी माथि दया गरी ।
दिनु होस् पतिको दान सत्कार्य हो सधैँभरि ॥

❀

विधेहि ते किङ्करीणामनुष्ठेयं तवाज्ञया ।
यच्छ्रद्धयानुतिष्ठन् वै मुच्यते सर्वतोभयात् ॥

दासी हौँ प्रभुका हामी सेवा के के गरौँ ? भन ।
भयमुक्त उही बन्छ तिमीमा दिन्छ जो मन ॥

❀

इत्थं स नागपत्नीभिर्भगवान् समभिष्टुतः ।
मूर्च्छितं भग्नशिरसं विससर्जाङ्घ्रिकुट्टनैः ॥

कृष्णका पाउको चोट पाएर नागका शिर ।
छिन्न भिन्न भए नाग भयो मूर्च्छित सत्वर ।
गरेथे नागपत्नीले कृष्णको जब कीर्तन ।
छोड्नु भो कृष्णले कुट्न दया साह्रै गरीकन ॥

❀

प्रतिलब्धेन्द्रियप्राणः कालियः शनकैर्हरिम् ।
कृच्छ्रात् समुच्छ्वसन् दीनः कृष्णं प्राह कृताञ्जलिः ॥

बिस्तारै नागको चेत फर्कियो सास लीकन ।
थाल्यो दीन बनी गर्न कृष्णको स्तुतिकीर्तन ॥

❁

वयं खलाः सहोत्पत्त्या तामसा दीर्घमन्यवः ।
स्वभावो दुस्त्यजो नाथ लोकानां यदसद्ग्रहः ॥

क्रोधी हौँ भगवन् ! हामी तामसी दुष्ट दुच्छर ।
स्वभाव सजिलै आफ्नू कसले छोड्न सक्छर ?
यसै कारणले गर्दा संसारी जन सर्वदा ।
अनेकौँ दुःखमा पर्छन् घुम्छन् संसारमा सदा ॥

❁

त्वया सृष्टमिदं विश्वं धातर्गुणविसर्जनम् ।
नानास्वभाववीर्योजोयोनिबीजाशयाकृति ॥

गुणको भेदले गर्दा नाना भाव दिईकन ।
विधाता ! प्रभुबाटै नै भयो यो विश्व सिर्जन ॥

❁

वयं च तत्र भगवन् सर्पा जात्युरुमन्यवः ।
कथं त्यजामस्त्वन्मायां दुस्त्यजां मोहिताः स्वयम् ॥

भगवन् ! प्रभुकै सृष्टि हामी हौँ क्रोधका घर ।
यो हो हजूरकै माया कसरी छोड्न सक्नु र ?

❀

भवान् हि कारणं तत्र सर्वज्ञो जगदीश्वरः ।
अनुग्रहं निग्रहं वा मन्यसे तद् विधेहि नः ॥

तिमी कारण सर्वज्ञ स्वामी हौ सब जान्दछौ ।
पाल या मार हे नाथ ! जो तिमी ठीक ठान्दछौ ॥

❀

इत्याकर्ण्य वचः प्राह भगवान् कार्यमानुषः ।
नात्र स्थेयं त्वया सर्प समुद्रं याहि मा चिरम् ॥

सुनी कालियको बात लीला मानिसले पनि ।
आफ्ना स्त्रीपुत्रका साथ छोडेर यमुना अनि ॥
समुद्र जान आदेश दिनु भो यमुनाजल ।
गाई मानिसले खान पार्नुभो योग्य निर्मल ॥

❀

य एतत् संस्मरेन्मर्त्यस्तुभ्यं मदनुशासनम् ।
कीर्तयन्नुभयोः सन्ध्योर्न युष्मद्भयमाप्नुयात् ॥

जुन मानिसले मेरो सर्पको अनुशासन ।
बिहान बेलुका सुन्ला भोग्दैन सर्पदंशन ॥

❀

योऽस्मिन् स्नात्वा मदाक्रीडे देवादींस्तर्पयेज्जलैः ।
उपोष्य मां स्मरन्नर्चेत् सर्वपापैः प्रमुच्यते ॥

मैले क्रीडा गरेको यो यमुना जलले जुन ।
गर्ला मानिसले स्नान देवतापितृतर्पण ॥
उपवास बसी गर्ला जल्ले पूजन चिन्तन ।
सम्पूर्ण त्यसका पाप होलान् तत्काल मोचन ॥

❀

द्वीपं रमणकं हित्वा ह्रदमेतमुपाश्रितः ।
यद्भयात् स सुपर्णस्त्वां नाद्यान्मत्पादलाञ्छितम् ॥

छोडी रमणकद्वीप यमुना ह्रदमा यहाँ ।
आएथ्यौ बस्न गाह्रो भै ताक्ष्र्यको डरले त्यहाँ ॥
तिमी फर्की उहीँ जाऊ ताक्ष्र्यको नलिई भय ।
तिम्रो शरीरमा मेरो पदचिन्ह छ निर्भय ॥

❀

एवमुक्तो भगवता कृष्णेनाद्भुतकर्मणा ।
तं पूजयामास मुदा नागपत्न्यश्च सादरम् ॥

पाएर कृष्णको आज्ञा मानेर बहुतै निको ।
स्त्रीसँगै नागले थाल्यो गर्न पूजन कृष्णको ॥

❀

दिव्याम्बरस्रङ्मणिभिः परार्घ्यैरपि भूषणैः ।
दिव्यगन्धानुलेपैश्च महत्योत्पलमालया ॥

राम्रा माला लुगा साथै आभूषण र चन्दन ।
पद्मपुष्पहरू अर्पी गरे श्रीकृष्णपूजन ॥

❀

पूजयित्वा जगन्नाथं प्रसाद्य गरुडध्वजम् ।
ततः प्रीतोऽभ्यनुज्ञातः परिक्रम्याभिवन्द्य तम् ॥

श्रद्धासाथ गरी पूजा पारे सन्तुष्ट श्रीहरि ।
प्रदक्षिणा गरी आज्ञा मागे हिँड्न उसै घरी ॥

❀

सकलत्रसुहृत्पुत्रो द्वीपमब्धेर्जगाम ह ।
तदैव सामृतजला यमुना निर्विषाभवत् ।
अनुग्रहाद् भगवतः क्रीडामानुषरूपिणः ॥

पत्नीपुत्र सुहृत् साथै लिएर नाग कालिय ।
हिंड्यो समुद्रकातर्फ भएर अति निर्भय ॥

कृपाले हरिको सारा कालिन्दी भित्रको जल ।
भयो अमृतझैँ मीठो खान योग्य सुनिर्मल ॥

❀

नागालयं रमणकं कस्मात्तत्याज कालियः ।
कृतं किं वा सुपर्णस्य तेनैकेनासमञ्जसम् ॥

छोड्यो कालियले आफ्नू निवास द्वीप त्यो किन ?
गऱ्यो गरुडको एक्लै बिराम उसले कुन ?

❀

उपहार्यैः सर्पजनैर्मासि मासीह यो बलिः ।
वानस्पत्यो महाबाहो नागानां प्राङ् निरूपितः ॥

राजन् ! गरुडका लागि सर्पले प्रतिमासिक ।
सर्पको बलि अर्पन्थे पूर्वशर्त मुताबिक ॥

❀

स्वं स्वं भागं प्रयच्छन्ति नागाः पर्वणि पर्वणि ।
गोपीथायात्मनः सर्वे सुपर्णाय महात्मने ॥

तोकिएका सबै सर्प महात्मा तार्क्ष्य खातिर ।
प्रत्येक पर्वमा दिन्थे बलि रक्षार्थ आखिर ॥

❁

विषवीर्यमदाविष्टः काद्रवेयस्तु कालियः ।
कदर्थीकृत्य गरुडं स्वयं तं बुभुजे बलिम् ॥

कद्रूको पुत्र कालिय विषवीर्यघमण्ड ली ।
आफैँ अघिसरी खान्थ्यो तार्क्ष्यको भागको बलि ॥

❁

तच्छ्रुत्वा कुपितो राजन् भगवान् भगवत्प्रियः ।
विजिघांसुर्महावेगः कालियं समुपाद्रवत् ॥

सुनेर सब त्यो बात विष्णुप्रिय खगेश्वर ।
क्रोधले जाइलागेथे मार्न कालिय सत्वर ॥

❁

तमापतन्तं तरसा विषायुधः
प्रत्यभ्ययादुच्छ्रितनैकमस्तकः ।
दद्भिः सुपर्णं व्यदशद् ददायुधः
करालजिह्वोच्छ्वसितोग्रलोचनः ॥

देख्यो जसै कालियले सुपर्णक,
उर्लेर झर्दा अति रुष्ट पावक।
जिब्रो निकालीकन लप्लपाउँदै,
तीखा सबै दाँतहरू उजाउँदै ।
फ्वाँफ्वाँ गरी सास चलाइ सत्वर,
पारेर आँखा बहुतै भयङ्कर।
ठड्याइ आफ्ना सय एक टाउका,
डस्यो गरुत्मान्कन सम्झिँदै फिका॥

❁

तं तार्क्ष्यपुत्रः स निरस्य मन्युमान्
प्रचण्डवेगो मधुसूदनासनः।
पक्षेण सव्येन हिरण्यरोचिषा
जघान कद्रूसुतमुग्रविक्रमः॥

ती तृक्षका नन्दन विष्णुवाहन,
उड्थे छिटो उग्र थियो पराक्रम।
देखेर दुस्साहस नागको अति,
खूबै रिसाए खगका स्वयं पति।
पक्रेर फ्याँके पर नाग कालिय,
हाने पखेटा त्यसमाथि निर्भय॥

❁

सुपर्णपक्षाभिहतः कालियोऽतीव विह्वलः ।
हृदं विवेश कालिन्द्यास्तदगम्यं दुरासदम् ॥

खाएर मार पक्षीका पतिको सर्प सत्वर ।
साह्रै विह्वल भै भाग्यो यमुनाह्रदका तिर ॥
थियो गरुडका लागि निषिद्ध र अरू पनि ।
पस्न सक्तैनथे त्यस्मा गहिरो त्यो थियो अनि ॥

❁

तत्रैकदा जलचरं गरुडो भक्ष्यमीप्सितम् ।
निवारितः सौभरिणा प्रसह्य क्षुधितोऽहरत् ॥

त्यही नै ठाउँमा पैले न खा सौभरिले भनी ।
भन्दा गरुडले खाए माछा भोका थिए उनी ॥

❁

मीनान् सुदुःखितान् दृष्ट्वा दीनान् मीनपतौ हते ।
कृपया सौभरिः प्राह तत्रत्यक्षेममाचरन् ॥

मुख्य माछो मरेकाले बाँकी विह्वल देखिए ।
त्यो देखी ऋषिले शाप तार्क्ष्यलाई त्यहीं दिए ॥

❁

अत्र प्रविश्य गरुडो यदि मत्स्यान् स खादति ।
सद्यः प्राणैर्वियुज्येत सत्यमेतद् ब्रवीम्यहम् ॥

यदि तार्क्ष्य यहाँ फेरि माछा खान पसे भने ।
तुरुन्तै प्राण जाने छ भनेर ऋषिले भने ॥

❀

तं कालियः परं वेद नान्यः कश्चन लेलिहः ।
अवात्सीद् गरुडाद् भीतः कृष्णेन च विवासितः ॥

त्यो कुरा जान्दथ्यो यौटा नाग कालिय केवल ।
त्यसै कारणले आयो कालिन्दीह्रदका तल ॥
कृष्णनिग्रहले गर्दा पुरानै उक्त द्वीपमा ।
गयो कालिय फर्केर लिई स्त्रीपुत्र साथमा ॥

❀

कृष्णं ह्रदाद् विनिष्क्रान्तं दिव्यस्रग्गन्धवाससम् ।
महामणिगणाकीर्णं जाम्बूनदपरिष्कृतम् ॥

मणिमाला लगाएर गहना वस्त्रभूषण ।
निस्किए भगवान् कृष्ण कालिन्दीबाट तत्क्षण ॥

❀

उपलभ्योत्थिताः सर्वे लब्धप्राणा इवासवः ।
प्रमोदनिभृतात्मानो गोपाः प्रीत्याभिरेभिरे ॥

देखेर भगवान् कृष्ण पुनर्जीवित भैँ गरी ।
व्रजवासी भए मक्ख अङ्कमाल गरे हरि ॥

❀

यशोदा रोहिणी नन्दो गोप्यो गोपाश्च कौरव ।
कृष्णं समेत्य लब्धेहा आसँल्लब्धमनोरथाः ॥

यशोदा रोहिणी नन्द गोपगोपीहरू सब ।
बौरिए कृष्ण पाएर मनाए खूब उत्सव ॥

❀

रामश्चाच्युतमालिङ्ग्य जहासास्यानुभाववित् ।
नगा गावो वृषा वत्सा लेभिरे परमां मुदम् ॥

जान्दथे बलले कृष्ण भगवान् हुन् भनीकन ।
अङ्कमाल गरी हाँसे दुवै भाइ मिलीकन ॥
देखेर कृष्ण ती बाछा गाईगोरुहरू सब ।
भए हर्षित अत्यन्तै मनाए खूब उत्सव ॥

❀

नन्दं विप्राः समागत्य गुरवः सकलत्रकाः ।
ऊचुस्ते कालियग्रस्तो दिष्ट्या मुक्तस्तवात्मजः ॥

पत्नीका साथ आएर गुरुले खुश भैकन ।
भाग्यले फर्किए भन्दै गरे कृष्णाभिनन्दन ॥
गएर नन्दका साथ भेटेर गुरुले तब ।
मनाए कृष्णको काल टरेकोमा महोत्सव ॥

❀

देहि दानं द्विजातीनां कृष्णनिर्मुक्तिहेतवे ।
नन्दः प्रीतमना राजन् गाः सुवर्णं तदादिशत् ॥

कृष्ण बाँचेर आएको खुशीको उपलक्ष्यमा ।
नन्दजीले दिए दान गाई स्वर्णादि विप्रमा ॥

❀

यशोदापि महाभागा नष्टलब्धप्रजा सती ।
परिष्वज्याङ्कमारोप्य मुमोचाश्रुकलां मुहुः ॥
यशोदा कालको पञ्जाबाट फर्क्यो भनी सुत ।
छातीमा कृष्ण टाँसेर बगाइन् आँसु अद्भुत ॥

❀

तां रात्रिं तत्र राजेन्द्र क्षुत्तृड्भ्यां श्रमकर्शिताः ।
ऊषुर्व्रजौकसो गावः कालिन्द्या उपकूलतः ॥

हे राजन् ! व्रजवासी ती गाई ग्वालाहरू सब ।
थकाइ भोक तिर्खाले थिए लस्तसरी तब ॥
सकेनन् व्रजमा जान यमुना तटमै अनि ।
गरे आराम रात्रीमा सबै थकित नै बनी ॥

❁

# ३. श्रवण

न यद्वचश्चित्रपदं हरेर्यशो
जगत्पवित्रं प्रगृणीत कर्हिचित् ।
तद्वायसं तीर्थमुसन्ति मानसा
न यत्र हंसा निरमन्त्युशिक्षया ॥
तद्ध्वाङ्क्षतीर्थं न तु हंससेवितं
यत्राच्युतस्तत्र हि साधवोऽमलाः ॥

नाना थरीका पदले समन्वित,
भए पनि श्रीहरिनामवर्जित ।
राम्रा भए तापनि काव्य ती सब
रछान नै ठान्दछ साधुले तब ॥
पढ्दैन विद्वान् जति माधुरी भर ।
उच्छिष्ट हो त्यो सब कागको घर ॥

❀

भाग्योदयेन बहुजन्मसमर्जितेन–
सत्सङ्गमञ्च लभते पुरुषो यदा वै ।
अज्ञानहेतुकृतमोहमदान्धकार–
नाशं विधाय हि तदोदयते विवेकः ॥

प्रारब्ध वा विगत सञ्चित पुण्यले नै
छन् प्राप्य साधुजन ती सब भाग्यले नै ।
अज्ञानकारक मदादि भएर नाश,
झुल्किन्छ बल्ल सुविवेक छरी प्रकाश ॥

❀

नृदेहमाद्यं सुलभं सुर्दुभम्
प्लवं सुकल्पं गुरुकर्णधारम् ।
मयानुकूलेन नभस्वतेरिता
पुमान् भवाब्धिं न तरेत् स आत्महा ॥

नृदेह हो दुर्लभ पाइने यो
डुङ्गा छ राम्रो गुरुकर्णधार ।
म दाहिने भै जब दिन्छु साथ
त्यो आत्महा हो नतरे त पार ॥

❀

स उच्चकाशे धवलोदरो दरो–
ऽप्युरुक्रमस्याधरशोणशोणिमा ।
दाध्मायमानः करकञ्जसम्पुटे
यथाब्जषण्डे कलहंस उत्स्वनः ॥

श्रीकृष्णले रक्तिम ओठमा धरी,
जसै बजाए निज शङ्ख बेसरी ।

त्यो देखियो पङ्कजमाझमा परी,
सुरम्य बोल्ने रजहाँस नै सरी ॥

❀

स्वस्त्यस्तु विश्वस्य खलः प्रसीदतां
ध्यायन्तु भूतानि शिवं मिथो धिया ।
मनश्च भद्रं भजतादधोक्षजे
आवेश्यतां नो मनरप्यहैतुकी ॥

संसारमा शान्ति हओस् सधैँभरि,
सद्बुद्धिदेउन् खलमा स्वयं हरि ।
प्राणी सबैको हित होस् परस्पर,
सद्भाव राखून सबले निरन्तर ॥
सन्मार्गमा यो मन नित्य लागोस्,
श्रीकृष्णको कीर्तनतर्फ जागोस् ॥

❀

न नाकपृष्ठं न च पारमेष्ठ्यं
न सार्वभौमं न रसाधिपत्यम् ।
न योगसिद्धीरपुनर्भवं वा
समञ्जस त्वा विरहय्य काङ्क्षे ॥

हे नाथ ! चाहन्न सुरेशलोक,
चाहन्न कैल्यै पनि सत्यलोक ।

सात्राज्य चाहन्न रसाधिपत्य,
चाहन्न सिद्ध्यादि कुनै असत्य ।।
चाहन्न कैल्यै पनि मोक्ष नाथ,
छोडी तिमी लानु छ के र साथ ?

अजातपक्षा इव मातरं खगाः
स्तन्यं यथा वत्सतराः क्षुधार्ताः ।
प्रियं प्रियेव व्युषितां विषण्णा
मनोऽरविन्दाक्ष दिदृक्षते त्वाम् ।।

चरा बचेरा जननी भनेर,
बस्छन् जसोरी गुँडमा कुरेर
बाछा ससाना अति भै क्षुधार्त,
बस्छन् कुरी माउ भएर आर्त ।
टाढा बसेको पति सम्भिर्ईकन,
बस्छे नवोढा जसरी दिई मन
त्यस्तै बसेको छु म भै अनाथ,
पाऊँ प्रभु दर्शन हौँ सनाथ ।।

# ४. मनन

यद्भक्तिं न विना भुक्तिर्यः सेव्यः सर्वयोगिनाम् ।
तं वन्दे परमानन्दघनं श्रीनन्दनन्दनम् ॥

जस्को भक्तिबिना मुक्ति हुँदैन यो बुझीकन ।
योगीहरू सधैँ गर्छन् जस्को सेवा र कीर्तन ॥
त्यस्ता परम आनन्दघन श्रीनन्दनन्दन–
लाई अत्यन्त भक्तिले म गर्छु अभिनन्दन ॥

❀

श्रीगोविन्दपदारविन्दमकरन्दास्वादशुद्धाशयाः
संसाराम्बुधिमुत्तरन्ति सहसा पश्यन्ति पूर्णं महः ।
वेदान्तैरवधारयन्ति परमं श्रेयस्त्यजन्ति भ्रमं
द्वैतं स्वप्नसमं विदन्ति विमलां विन्दन्ति चानन्दताम् ॥

श्रीगोविन्दपदारविन्दमधुको आस्वादले ध्वै मन ।
तर्छन् यो भवसिन्धुबाट सजिलै देख्छन् परं कञ्चन ।
वेदान्तै पनि बुझ्दछन् सहजमा छोडेर सारा भ्रम ।
द्वैतस्वप्न समान सम्झन गई बढ्नेछ शान्ति क्रम ॥

❀

कुर्वन्ति केऽपि कृतिनः क्वचिदप्यनन्ते
स्वान्तं विधाय विषयान्तरशान्तिमेव ।
त्वत्पादपद्मविगलन्मकरन्दबिन्दु–
मास्वाद्यमाद्यति मुहुर्मधुभिन्मनो मे ॥

गर्छन् कुनै बुध यहाँ प्रभुमा विशेष ।
राखेर भित्र मनमा नित शान्ति शेष ॥
तिम्रा दुवै कमल झैँ पदबाट झर्दो ।
चाखेर नै मह भयो मन मत्त मेरो ॥

❀

पराकृतनमद्बन्धं परं ब्रह्म नराकृति ।
सौन्दर्यसार सर्वस्वं वन्दे नन्दात्मजं महः ॥

सौन्दर्यसारसर्वस्व मान्छेको रूप लीकन ।
जन्मियौ नन्दका पुत्र भएर हे सनातन !
काटिद्यौ हे प्रभो ! मेरा यी सारा भवबन्धन ।
हे ब्रह्म ! म सधैँ गर्छु म तिम्रो अभिवन्दन ॥

❀

यस्यास्ति भक्तिर्भगवत्यकिञ्चना
सर्वैगुणैस्तत्र समासते सुराः ।
हरावभक्तस्य कुतो महद्गुणा
मनोरथेनासति धावतो बहिः ॥

जस्को छ आत्यन्तिक भक्ति कृष्णमा,
त्यस्मा सबै सद्‌गुण वास गर्दछन् ।
अभक्तमा सद्‌गुण पाइने कहाँ,
जो नित्य नै बाहिरतर्फ कुद्‌दछन् ॥

हरिर्हि साक्षाद्‌भगवान् शरीरिणा-
मात्मा झषाणामिव तोयमीप्सितम् ।
हित्वा महांस्तं यदि सज्जते गृहे
तदा महत्त्वं वयसा दम्पतीनाम् ॥

श्रीकृष्ण नै जीवन हुन् समस्तका,
मत्स्यादिको जीवन खालि नीर हो ।
बिर्सेर नारायण बाँचियो भने,
त्यहाँ महत्ता गुण हैन, आयु हो ॥

# ५. निदिध्यासन (१)

भगवानपि ता रात्रीः शरदोत्फुल्लमल्लिकाः ।
वीक्ष्य रन्तुं मनश्चक्रे योगमायामुपाश्रितः ॥

भगवान् पनि त्यो रात मल्लिका फूल शारदी–
फुलेको मस्त देखेर ध्यान नै त्यसतर्फ दी ॥
रासका निम्तिमा शक्ति योगमाया लिईकन ।
गर्नु भो रचना आफैं अमना भै स्वयं मन ॥

❀

अन्तर्गृहगताः काश्चिद् गोप्योऽलब्धविनिर्गमाः ।
कृष्णं तद्भावनायुक्ता दध्युर्मीलितलोचनाः ॥

रोकिए कति ती गोपी घरका भित्र जो थिए ।
जान बाहिर पाएनन् ध्यानमा मस्त भै दिए ॥

❀

दुःसहप्रेष्ठविरहतीव्रतापधुताशुभाः ।
ध्यानप्राप्ताच्युताश्लेषनिर्वृत्या क्षीणमङ्गलाः ॥

कृष्णको विरहाग्निले जलेर भित्रको मल ।
अन्तस्करण भो स्वच्छ भए ध्वस्त अमङ्गल ॥
पाएर ध्यानमै कृष्ण आलिङ्गन गरीकन ।
कृतकृत्य भए गोपी सारै प्रफुल्ल भो मन ॥

तमेव परमात्मानं जारबुद्ध्यापि सङ्गताः ।
जहुर्गुणमयं देहं सद्यः प्रक्षीणबन्धनाः ॥
भगवान् कृष्णकासाथ जारबुद्धि गरीकन ।
नाशियो गुणको देह नाशिए कर्मबन्धन ॥

कृष्णं विदुः परं कान्तं न तु ब्रह्मतया मुने ।
गुणप्रवाहोपरमस्तासां गुणधियां कथम् ॥

हे ब्रह्मन् ! गोपिनी खालि कृष्णमा जारभावले ।
गर्दथे प्रेम, गर्थेनन् प्रेम ब्रह्मात्मभावले ॥
गुणमा नै थियो प्रेम भने ती गोपिनी सब ।
गुणबाटै हुनू मुक्त कसरी हुन्छ सम्भव ?

स्वागतं वो महाभागाः प्रियं किं करवाणि वः ।
व्रजस्यानामयं कच्चिद् ब्रूतागमनकारणम् ॥

हे मेरा प्रिय गोपी हो ! तिम्रो स्वागत गर्दछु ।
तिम्रो प्रिय हुने काम भन ! के गर्न सक्तछु ॥
व्रजको हाल राम्रै छ ? अथवा छ कुनै भय ?
रातमा किन आएका ? बताऊ सब निर्भय ॥

❀

रजन्येषा घोररूपा घोरसत्त्वनिषेविता ।
प्रतियात व्रजं नेह स्थेयं स्त्रीभिः सुमध्यमाः ॥

सुन्दरी प्रिय गोपी हो ! रात यो छ भयङ्कर ।
घुम्दछन् वनका जन्तु यत्रतत्र निरन्तर ॥
यसैकारणले जाऊ फर्केर सब गोकुल ।
राम्रो हुँदैन नारीले रातमा बस्नु जङ्गल ॥

❀

मातरः पितरः पुत्रा भ्रातरः पतयश्च वः ।
विचिन्वन्ति ह्यपश्यन्तो मा कृढ्वं बन्धुसाध्वसम् ॥

तिमीहरू नदेखेर तिम्रा पुत्र पिता सुत ।
आमा भाइहरू सारा भएर अति चिन्तित ॥
खोज्दै होलान् भई दुःखी यसैले गोपिनी अब ।
नपार दुःखमा जाऊ फर्किएर तिमी सब ॥

❀

भर्तुः शुश्रूषणं स्त्रीणां परो धर्मो ह्यमायया ।
तद्बन्धूनां च कल्याण्यः प्रजानां चानुपोषणम् ॥

हे कल्याणमयी गोपि ! सावधान भई सुन ।
पति, बन्धु र ठूलाको सेवा गर्नु दिई मन ॥
आफ्ना सन्तानको गर्नु राम्रो पालनपोषण ।
यही नै मानिएको छ स्त्रीको धर्म सनातन ॥

❀

दुःशीलो दुर्भगो वृद्धो जडो रोग्यधनोऽपिवा ।
पतिः स्त्रीभिर्न हातव्यो लोकेप्सुभिरपातकी ॥

आफ्नू कल्याणको इच्छा गर्ने स्त्रीले सधैँभर ।
पातकी पति छोडेर गरून् सेवा निरन्तर ॥
अभागी मूर्ख दुःशील रोगी बूढो र निर्धन ।
जस्तै पति हओस् आफ्नू गरोस् सेवा दिई मन ॥

❀

अस्वर्ग्यमयशस्यञ्च फल्गु कृच्छ्रं भयावहम् ।
जुगुप्सितञ्च सर्वत्र औपपत्यं कुलस्त्रियाः ॥

कुलीन स्त्रीहरूद्वारा जारका साथ लस्पस–
गर्नु, कैल्यै हुँदैहुन्न यसले हुन्छ दुर्यश ॥

यो लोक पनि बिग्रिन्छ बिग्रिन्छ परको पनि ।
निन्दनीय छ यो काम तुच्छ क्षणिक हो अनि ॥

❀

श्रवणाद् दर्शनाद् ध्यानान्मयि भावाऽनुकीर्तनात् ।
न तथा सन्निकर्षेण प्रतियात ततो गृहान् ॥

हे गोपी हो ! सधैँ मेरो लीला र गुण चिन्तन ।
रूपका ध्यानका साथै मेरो भजनकीर्तन ॥
गर्‍यौ भने म बन्नेछु खुशी सान्निध्य बन्दछु ।
सँगै बसेर क्यै हुन्न फर्की जाऊ म भन्दछु ॥

❀

इति विप्रियमाकर्ण्य गोप्यो गोविन्दभाषितम् ।
विषण्णा भग्नसङ्कल्पाश्चिन्तामापुर्दुरत्ययाम् ॥

यसरी कृष्णाको वाक्य सुनेर गोपिनीजन ।
भए उदास अत्यन्त भाँचियो सबको मन ॥

❀

कृत्वा मुखान्यव शुचः श्वसनेन शुष्यद्-
बिम्बाधराणि चरणेन भुवं लिखन्त्यः ।

अस्रैरुपात्तमषिभिः कुचकुङ्कुमानि
तस्थुर्मृजन्त्य उरुदुःखभराः स्म तूष्णीम् ॥

ती गोपिका अधरबिम्ब बढेर सास,
फुस्रा भए सकल खूब भए हताश।
घोप्टो भई चरणले तल भूमि कोरी,
रोए बगाइकन आँशु सबै किशोरी।
सारै भयो सकस चूप भएर फेरि,
सारा खडा भइरहे हरितर्फ हेरी ॥

❀

प्रेष्ठं प्रियेतरमिव प्रतिभाषमाणं
कृष्णं तदर्थविनिवर्तितसर्वकामाः।
नेत्रे विमृज्य रुदितोपहते स्म किञ्चित्
संरम्भगद्गदगिरोऽब्रुवतानुरक्ताः ॥

प्रेमी निमित्त घरबार र काम छोडी,
श्रीकृष्णमै सकल भाव र वृत्ति जोडी।
आए तथापि हरिको व्यवहारदेखी,
साह्रै भए व्यथित चूर्ण भएर शेखी ॥
रोए सबै धरधरी अनि नेत्र लाल,
पारे भयो सकलको अति नै बिहाल।

पुछ्तै दुवै नयन धैर्य असाध्य राखी,
थाले सुनाउन कुरा कटुता नराखी ॥

मैवं विभोऽर्हति भवान् गदितुं नृशंसं
सन्त्यज्य सर्वविषयांस्तव पादमूलम् ।
भक्ता भजस्व दुरवग्रह मा त्यजास्मान्
देवो यथाऽऽदिपुरुषो भजते मुमुक्षून् ॥

यस्तो कठोर नहुनोस् यदुनाथ ! ऐले,
आयौँ सबै विषय दूर गरी क्रमैले ।
माया नमार सब हौँ अति भक्त हामी,
विश्वेशझैँ बन तिमी प्रभुधर्म थामी ॥

यत्पत्यपत्यसुहृदामनुवृत्तिरङ्ग
स्त्रीणां स्वधर्म इति धर्मविदा त्वयोक्तम् ।
अस्त्वेवमेतदुपदेशपदे त्वयीशे
प्रेष्ठो भवांस्तनुभृतां किल बन्धुरात्मा ॥

स्त्रीधर्म हो घर बसी पतिको सुसार,
गर्नू अपत्यसँगमा सबको विचार ।
धर्मज्ञ हौ तब भन्यौ तर बन्धु आत्मा,
हौ नाथ नै सकलका प्रिय अन्तरात्मा ॥

कुर्वन्ति हि त्वयि रतिं कुशलाः स्व आत्मन्
नित्यप्रिये पतिसुतादिभिरार्तिदैः किम् ।
तन्नः प्रसीद परमेश्वर मा स्म छिन्द्या
आशां भृतां त्वयि चिरादरविन्दनेत्र ॥

आत्मा तिमी सकलका सुखका स्वरूप,
पुत्रादि हुन् सकल दुःखद दुःखरूप ।
हे कृष्ण ! हौ खुस तिमी सब छौँ अनाथ,
आशालता नगर छिन्न र भिन्न नाथ !

चित्तं सुखेन भवतापहृतं गृहेषु
यन्निर्विशत्युत करावपि गृह्यकृत्ये ।
पादौ पदं न चलतस्तव पादमूलात्
यामः कथं व्रजमथो करवाम किं वा ॥

चोऱ्यौ सुटुक्क मन यो घरबाट ऐले,
पुत्रादिमा रत थियो जुन नाथ ! पैले ।
जाऊँ भने घर हरे ! जडझैँ छ पाउ,
चल्दैन जानु कसरी अब लौ बताऊ ॥

सिञ्चाङ्ग नस्त्वदधरामृतपूरकेण
हासावलोककलगीतजहृच्छयाग्निम् ।

नो चेद् वयं विरहजाग्न्युपयुक्तदेहा
ध्यानेन याम पदयोः पदवीं सखे ते ॥

तिम्रा यिनै मधुर चाल र हास्यबाट,
सन्तप्त भो हृदय यो विरहाग्निबाट ।
आगो निभाउ अधरामृत नै छरेर,
ध्यानस्थ भै नतर ता मिलुँला मरेर ॥

❀

यर्ह्यम्बुजाक्ष तव पादतलं रमाया
दत्तक्षणं क्वचिदरण्यजनप्रियस्य ।
अस्प्राक्ष्म तत्प्रभृति नान्यसमक्षमङ्ग
स्थातुं त्वयाभिरमिता बत पारयामः ॥

छाडेर आश्रितरमा पनि आज खास,
गर्छौं अरण्यजनका सँगमा निवास ।
हामी भयौँ सहचरी जब नाथसाथ,
जाँदैन यो मन कतैतिर लौ न नाथ ॥

❀

श्रीर्यत्पदाम्बुजरजश्चकमे तुलस्या
लब्ध्वापि वक्षसि पदं किल भृत्यजुष्टम् ।
यस्याः स्ववीक्षणकृतऽन्यसुरप्रयास-
स्तद्वद् वयं च तव पादरजः प्रपन्नाः ॥

लक्ष्मी निमित्त सुर छन् सब नित्य दास,
श्रीविष्णुका हृदयमा छ रमानिवास ।
छाडेर हृत् तर रमा चरणाभिलाषी–
छिन्, छौँ तिनै चरणका सब आज दासी ॥

❀

तन्नः प्रसीद वृजिनार्दन तेऽङ्घ्रिमूलं
प्राप्ता विसृज्य वसतीस्त्वदुपासनाशाः ।
त्वत्सुन्दरस्मितनिरीक्षणतीव्रकाम–
तप्तात्मनां पुरुषभूषण देहि दास्यम् ॥

छोडी सबै स्वजन सम्झिइ एकनाथ,
आयौँ प्रभो ! शरणमा अति भक्तिसाथ ।
तिम्रो हँसाइ र निरीक्षणबाट सारा,
मर्ने भयौँ अब दिनोस् पदको सहारा ॥

❀

वीक्ष्यालकावृतमुखं तव कुण्डलश्री
गण्डस्थलाधरसुधं हसितावलोकम् ।
दत्ताभयं च भुजदण्डयुगं विलोक्य
वक्षः श्रियैकरमणं च भवाम दास्यः ॥

देखेर सुन्दर मुखश्री सुरम्य गाला,
हाँसो बिछ्ट्ट रसिलो अति मस्त चाला ।
रक्षार्थ बाहु र रमाहृदयाधिवासी,
हामी भयौँ चरणका अब नित्य दासी ॥

❀

का स्त्र्यङ्ग ते कलपदायतमूर्च्छितेन
सम्मोहिताऽऽर्य चरितान्न चलेत्त्रिलोक्याम् ।
त्रैलोक्यसौभगमिदं च निरीक्ष्य रूपं
यद् गोद्विजद्रुममृगाः पुलकान्यबिभ्रन् ॥

तिम्रो विचित्र मनमोहक वेणुनाद,
सुन्दै भए मृगचरातरु लट्ठ नाथ !
त्यै नादले मन लियो अनि लाज शर्म,
जोगाउनै कठिन भो अब आर्यधर्म ॥

❀

व्यक्तं भवान् व्रजभयार्तिहरोऽभिजातो
देवो यथाऽऽदिपुरुषः सुरलोकगोप्ता ।
तन्नो निधेहि करपङ्कजमार्तबन्धो
तप्तस्तनेषु च शिरस्सु च किङ्करीणाम् ॥

जन्म्यौ तिमी व्रजविषे भय हर्नलाई,
जस्तो छ ढुक्क सुरलोक उपेन्द्र पाई ।
हे कृष्ण ! लौन सदयी बन यो घरीमा,
सन्तप्त छौँ अब दया गर किङ्करीमा ॥

❁

ताभिः समेताभिरुदारचेष्टितः
प्रियेक्षणोत्फुल्लमुखीभिरच्युतः ।
उदारहासद्विजकुन्ददीधिति–
र्व्यरोचतैणाङ्क इवोडुभिर्वृतः ॥

गोपीहरूबाट ढपक्क घेरिँदै,
उदारचेष्टासँग खूब मस्किँदै ।
मुसुक्क हाँसे हरि रूपका धनी,
गोपी भए मुग्ध कृतार्थ नै बनी ।
ताराहरूबाट ढपक्क घेरिँदा,
देखिन्छ शोभा जुन जूनका सरी ।
गोपीहरूबाट ढपक्क घेरिँदा,
त्यस्तै भए शोभितझैँ स्वयं हरि ॥

❁

बाहुप्रसारपरिरम्भकरालकोरु
नीवीस्तनालभननर्मनखाग्रपातैः ।
क्ष्वेल्यावलोकहसितैर्व्रजसुन्दरीणा–
मुत्तम्भयन् रतिपतिं रमयाञ्चकार ॥

फैलाइ हात दुइटै अनि अङ्कमाल,
गर्दै दवाइकन हातसँगै कपाल ।
छोएर जाँघ कुच नीवि समस्त अङ्ग,
गर्दै नखक्षत जगाउनु भो अनङ्ग ।
हाँसी मुसुक्क सबका सँगमा पियार,
बाँडेर नै शुरु गरे हरिले विहार ॥

# ६. निदिध्यासन (२)

जयति तेऽधिकं जन्मना व्रजः
श्रयत इन्दिरा शश्वदत्र हि ।
दयित दृश्यतां दिक्षु तावका-
स्त्वयि धृतासवस्त्वां विचिन्वते ॥

व्रज भयो महान् नाथ जन्मँदा,
अब रमा यहीँ बस्तछिन् सदा ।
सकलभित्र छौ कृष्ण जान्दछौँ,
हजुर निम्ति नै प्राण धान्दछौँ ।
कति घुमौँ हरे ! घोर यो वन,
प्रिय छिटै दिनोस् दिव्य दर्शन ॥

❀

शरदुदाशये साधुजातसत्-
सरसिजोदरश्रीमुषा दृशा ।
सुरतनाथ तेऽशुल्कदासिका-
वरद निघ्नतो नेह किं वधः ॥

शरदकालका स्वच्छ नीरमा,
सहज फक्रने पद्मबीचमा ।
जुन छ रम्यता त्यो हजूरका,
नयनमा सधैँ बस्छ भै ढिका ।
नयनले तिनै हेर्दछौ जब,
वध गरेर नै छोड्दछौ तब ।
नयन युग्मले गर्दछौ वध,
सुरतनाथ हे ! हुन्न के वध ?
युवति गोपिनी पात्र कामका,
सकल किङ्करी हौँ बिदामका ॥

❁

विषजलाप्ययाद्व्यालराक्षसाद्–
वर्षमारुताद्वैद्युतानलात् ।
वृषमयात्मजाद्विश्वतोभया–
दृषभ ते वयं रक्षिता मुहुः ॥

पुरुषसिंह हे ! सर्प राक्षस,
सकल ती भए नाथका वश ।
विविध कष्ट वा दुःखमा पनि,
अभय जो दियौ ढालझैँ बनी ॥

❁

न खलु गोपिकानन्दनो भवा–
नखिलदेहिनामन्तरात्मदृक् ।
विखनसार्थितो विश्वगुप्तये
सख उदेयिवान् सात्वतां कुले ॥

हजुर होइनौ गोपिकासुत,
सकल भित्र छौ साक्ष्य अद्भुत ।
अजनको सुनी प्रार्थना सब,
यदुकुलैविषे जन्मियौ अब ॥

❁

विरचिताभयं वृष्णिधुर्य ते
चरणमीयुषां संसृतेर्भयात् ।
करसरोरुहं कान्त कामदं
शिरसि धेहि नः श्रीकरग्रहम् ॥

जननमृत्युका त्रासले गरी,
शरण पर्छ जो पाउमा परी ।
प्रणत भक्तका ती सबै भय,
यदुपते ! तिमी गर्दछौ क्षय ।
जलधिजाभुजा पक्रने कर,
कमलबाहु ती माथमा धर ॥

❁

व्रजजनार्तिहन् वीर योषितां
निजजनस्मयध्वंसनस्मित ।
भज सखे भवत्किङ्करीः स्म नो
जलरुहाननं चारु दर्शय ॥

मुसुमुसू जसै कृष्ण ! हाँस्तछौ,
स्वजनको सबै गर्व नास्तछौ ।
व्रजजनार्तिहन् ! वीर हे वर !
कमल नेत्र हे ! निस्क सत्वर ॥

प्रणतदेहिनां पापकर्शनं
तृणचरानुगं श्रीनिकेतनम् ।
फणिफणाऽर्पितं ते पदाम्बुजं
कृणु कुचेषु नः कृन्धि हृच्छयम् ॥

प्रणत भक्तको पाप हर्दिने,
पशु लिई सँगै नित्य हिँड्दिने ।
चरण राख ती वक्षमा अब,
हृदयका व्यथा नाश हुन् सब ॥

मधुरया गिरा वल्गुवाक्यया
बुधमनोज्ञया पुष्करेक्षण ।

विधिकारीरिमा वीर मुह्यती–
रधरसीधुनाऽऽप्यायस्व नः ॥

मधुर वाक्यले हर्दछौ सुध,
कमल नेत्र हे ! मुग्ध छन् बुध ।
सकल किङ्करी मुग्ध आज छौँ,
अधरपानको आश गर्दछौँ ॥

तव कथाऽमृतं तप्तजीवनं
कविभिरीडितं कल्मषापहम् ।
श्रवणमङ्गलं श्रीमदाततं
भुवि गृणन्ति ते भूरिदा जनाः ॥

अमृत हो कथा तप्तजीवको,
सकल नास्छ यो मूल पापको ।
कवि सुनाउँछन् कीर्ति निर्मल,
श्रवणमात्रले गर्छ मङ्गल ।
मधुर मादले युक्त भैकन,
सकल भक्तको हर्छ यो मन ।
हजुरको कथा जो सुनाउँछन्,
भुवनमा तिनै दानवीर हुन् ॥

प्रहसितं प्रिय प्रेमवीक्षणं
विहरणञ्च ते ध्यानमङ्गलम् ।
रहसि संविदो या हृदिस्पृशः
कुहक नो मनः क्षोभयन्ति हि ॥

अघि थियो हँसी प्रेमवीक्षण,
हृदयमा थियो ध्यान चिन्तन ।
जब त भेट भो सुम्पियौँ मन,
कपट छोड हे ! नन्दनन्दन !

❀

चलसि यद् व्रजाच्चारयन् पशून्
नलिनसुन्दरं नाथ ते पदम् ।
शिलतृणाङ्कुरैः सीदतीति नः
कलिलतां मनः कान्त गच्छति ॥

पशुहरू सबै साथमा भई,
विपिनमा तिमी घुम्दछौ गई ।
सकस पाउलान् पाउले भनी,
सकल बस्तछौँ दीन झैँ बनी ॥

❀

दिनपरिक्षये नीलकुन्तलै–
र्वनरुहाननं बिभ्रदावृतम् ।

घनरजस्वलं दर्शयन् मुहु–
मर्नसि नः स्मरं वीर यच्छसि ॥

जब उदाउँछौ साँझमा घर,
अलक बन्दछन् धूलिधूसर ।
सकल देख्तछौं श्याम सुन्दर,
मन नथामिने जे सुकै गर ॥

❀

प्रणतकामदं पद्मजार्चितं
धरणिमण्डनं ध्येयमापदि ।
चरणपङ्कजं शन्तमञ्च ते
रमण नः स्तनेष्वर्पयाधिहन् ॥

प्रणतको कुरा पूर्ण गर्दिने,
चरण ती रमाबाट पूजिने ।
भुवनमा सधैँ दिव्य देखिने,
भय हुँदा तिनै नित्य सम्झिने ।
चरण पद्म हुन् कृष्ण ! नाथका,
शिवद छन् सधैँ निम्ति भक्तका ।
रमण हे ! तिनै पाउ सुन्दर,
मदनतप्त यो बक्षमा धर ॥

❀

सुरतवर्धनं शोकनाशनं
स्वरितवेणुना सुष्ठु चुम्बितम् ।
इतररागविस्मारणं नृणां
वितर वीर नस्तेऽधरामृतम् ॥

रति बढाउने शोक नाशने,
स्वरित वेणुले ओठ जो छुने ।
इतर रागको गर्दिने क्षय,
अमृत ओठको बाँड निर्भय ॥

अटति यद् भवानह्नि काननं
त्रुटिर्युगायते त्वामपश्यताम् ।
कुटिलकुन्तलं श्रीमुखञ्च ते
जड उदीक्षतां पक्ष्मकृद् दृशाम् ॥

दिनहुँदो तिमी घुम्दछौ वन,
क्षण हुने युगौं रुन्छ यो मन ।
जब त आउँछौ साँझमा घर,
नयन झिम्किने देख्न दुष्कर ।
नयनपक्ष्म यी सिर्जिने अज,
अबुझ हुन् हरे ! पद्मनाभज ॥

पतिसुतान्वयभ्रातृबान्धवा–
नतिविलङ्घ्य तेऽन्त्यच्युतागताः ।
गतिविदस्तवोद्गीतमोहिताः
कितव योषितः कस्त्यजेन्निशि ॥

पति सुतादि वा भाइ बान्धव,
सकलको गरी त्याग माधव !
अनुचरी भयौं जान्दछौँ गति,
मधुर वेणुले तानियो मति ।
सकल जान्दछौँ हौ छली तर,
युवति रातमा छोड्छ को नर ?

रहसि संविदं हृच्छयोदयं
प्रहसिताननं प्रेमवीक्षणम् ।
बृहदुरः श्रियो वीक्ष्य धाम ते
मुहुरतिस्पृहा मुह्यते मनः ॥

लुकिलुकी तिमी भेट गर्दछौ,
हँसमुखे भई प्रेम छर्दछौ ।
प्रणययुक्त भै खूब हेर्दछौ,
सकल गोपिनी लट्ठ पार्दछौ ।
विपुल वक्षमा बस्तछिन् रमा,
मन छ मुग्ध यो नित्य नाथमा ॥

व्रजवनौकसां व्यक्तिरङ्ग ते
वृजिनहन्त्र्यलं विश्वमङ्गलम् ।
त्यज मनाक् च नस्त्वत्स्पृहात्मनां
स्वजनहृद्रुजां यन्निषूदनम् ॥

वचनबाट जे भन्दछौ जति,
सकलको हुने मङ्गलै अति ।
हृदयको बढ्यो रोग बेसरी,
अब त ओखती द्यौ छिटो गरी ॥

यत्ते सुजातचरणाम्बुरुहं स्तनेषु
भीताः शनैः प्रिय दधीमहि कर्कशेषु ।
तेनाटवीमटसि तद् व्यथते न किंस्वित्
कूर्पादिभिर्भ्रमति धीर्भवदायुषां नः ॥

तिम्रा दुवै चरण छन् सुकुमार नामी,
राख्छौं कठोर कुचमाथि डराइ हामी ।
घुम्छौ तिनै चरणले मन दुःख्छ धेर,
बिभ्क्लान् कि ! कण्टक कतै पदमा भनेर ।
बस्ने अझै पनि रुँदै कतिसम्म हामी,
बाँच्ने अझै कति यहाँ मुटु रुग्ण थामी ।
आशै गरी सकल बित्छ कि ! जिन्दगानी,
बाँच्नै छ तै पनि कुनै ननिको नमानी ॥

# ७. साक्षात्कार

नाहं तु सख्यो भजतोऽपि जन्तून्
भजाम्यमीषामनुवृत्तिवृत्तये ।
यथाधनो लब्धधने विनष्टे
तच्चिन्तयान्यन्निभृतो न वेद ॥

गोपीहरू हो ! म त भक्तकासँग,
जो गर्नुपर्थ्यो व्यवहार ऊसँग ।
उल्टो म गर्छु व्यवहार तै पनि,
लागोस् ममा नै मन भक्तको भनी ।
गरीबले दौलत पाइ नष्ट,
भयो भने ता जुन हुन्छ कष्ट ।
त्यसै गरी मै पनि भेटिएर,
हराउँछु प्रेम बढोस् भनेर ॥

❀

एवं मदर्थोज्झितलोकवेद–
स्वानां हि वो मय्यनुवृत्तयेऽबलाः ।
मया परोक्षं भजता तिरोहितं
मासूयितुं मार्हथ तत् प्रियं प्रियाः ॥

हे गोपिनी हो ! सब वेदमार्ग,
छोड्यौ म भन्दै अनि लोकमार्ग ।
आफन्त छोड्यौ म पछाडि लागी,
छोड्यौ सबै स्वार्थ बनी विरागी ।
जानी सबै तै पनि हुन्छु टाढा,
रहोस् ममा ठान्दछु सख्य गाढा ।
ममा कुनै दोष नदेख सत्य,
छ प्रेम मेरो सब साथ नित्य ॥

❀

न पारयेऽहं निरवद्यसंयुजां
स्वसाधुकृत्यं विबुधायुषापि वः ।
या माभजन् दुर्जरगेहशृङ्खलाः
संवृश्च्य तद् वः प्रतियातु साधुना ॥

साह्रै दरो त्यो घरबारशृङ्खला,
तोड्यौ तिमीले सजिलै भयो थला ।
जो हुन्न योगीजनबाट सम्भव,
गर्‍यौ तिमीले सजिलै उही सब ।
हाम्रो छ सम्बन्ध अतीव निर्मल,
यो प्रेम हो प्राकृत शुद्ध निश्छल ।
लायौ मलाई ऋण यो छ दुस्तर,
तिरिन्न पाए पनि देह निर्जर ।

गऱ्यौ भने क्यै शुभकार्य मैप्रति,<br>
बन्ने छु होला अऋणी म सम्प्रति ।<br>
न ता युगौँ जन्म लिएर नै पनि,<br>
म हुन्छु तिम्रै जहिलेसुकै ऋणी ॥

❀

पादन्यासैर्भुजविधुतिभिः सस्मितैर्भ्रूविलासै-<br>
र्भज्यन्मध्यैश्चलकुचपटैः कुण्डलैर्गण्डलोलैः ।<br>
स्विद्यन्मुख्यः कबररशनाग्रन्थयः कृष्णवध्वो<br>
गायन्त्यस्तं तडित इव ता मेघचक्रे विरेजुः ॥

गोपी सारा विविध विधिले नृत्यको चाल गर्थे ।<br>
कैले सर्थे अघि र कहिले पश्चमा फेरि सर्थे ।<br>
कैले घुम्थे फनफन गरी हातको भाउ गर्दै ।<br>
कैले हाँस्थे प्रणयसँगमा आखिभौँ खूब मार्दै ॥<br>
कैले झुक्थे भुइँतिर कटी भाँचिए झैँ गरेर ।<br>
हल्लिन्थे झन् कुचयुगल ती वस्त्र उड्थे झरेर ॥<br>
चम्कन्थे ती चपल अति नै गण्डमा कर्णभार ।<br>
नाच्ता झर्थे सहज मुखमा स्वेदथोपा हजार ॥<br>
चुल्ठो नीवी अलि अलि गरी खुस्कनेतर्फ लागे ।<br>
गोपी बिर्सी लटपट सबै कृष्णाका साथ जागे ॥<br>
मानो कालो जलदसरि छन् बीचमा कृष्ण एक ।<br>
कैयौँ गोपीसरह बिजुली साथमा छन् अनेक ॥

❀

एवं परिष्वङ्गकराभिमर्श–
स्निग्धेक्षणोद्दामविलासहासैः ।
रेमे रमेशो व्रजसुन्दरीभि–
र्यथार्भकः स्वप्रतिबिम्बविभ्रमः ॥

जस्तै कुनै बालक खेल्छ दी मन,
छाया स्वयंका सँगमा भुलीकन ।
त्यस्तै रमाका पति गोपिनीजन,
लिएर खेले गरी नै बिडम्बन ।
च्याप्थे चपक्कै मुटुमा लगाई,
छुन्थे खुशी भै अनि अङ्गलाई ।
हेर्थे सबै ती पिरती गरेर,
छड्के गरी नेत्रहरू तरेर ।
ती गोपिनीका सँगमा यसो गरी,
क्रीडा गरे श्रीहरिले थरी थरी ॥

❀

तदङ्गसङ्गप्रमदाकुलेन्द्रियाः
केशान् दुकूलं कुचपट्टिकां वा ।
नाञ्जः प्रतिव्योढुमलं व्रजस्त्रियो,
विस्रस्तमालाभरणाः कुरुद्वह ॥

पाएर गोपी हरि अङ्गसङ्ग,
भए सबै ती अति नै फुरुङ्ग ।

भए सबै व्याकुल इन्द्रियादि,
माला फुके फर्फर केश आदि ।
राजन् ! क्रमैले गहना र वस्त्र,
खुस्केर झर्दा पनि ती समस्त ।
सम्हाल्नलाई नसकेर गोपी,
भए तदाकारित कृष्ण छोपी ॥

❀

गोप्यः स्फुरत्पुरटकुण्डलकुन्तलत्विड्–
गण्डश्रिया सुधितहासनिरीक्षणेन ।
मानं दधत्य ऋषभस्य जगुः कृतानि
पुण्यानि तत्कररुहस्पर्शप्रमोदाः ॥

गोपी थिए खुश बढी मनमा मिठास,
पाएर कृष्णकरको नखदंश खास ।
गाला थिए झलल कुण्डल दीप्ति पाई,
जस्मा थिए अलक चञ्चल चम्चमाई ।
छड्के निरीक्षण थियो अनि मन्द हास,
पीयूषझैँ अति थियो मनमुग्ध खास ।
यै रूपबाट सबले प्रिय कृष्णलाई,
सम्मान अर्पण गरे अनि गीत गाई ॥

❀

ताभिर्युतः श्रममपोहितुमङ्गसङ्ग–
घृष्टस्रजः स कुचकुङ्कुमरञ्जितायाः ।
गन्धर्वपालिभिरनुद्रुत आविशद् वाः
श्रान्तो गजीभिरिभराडिव भिन्नसेतुः ॥

ती गोपिका सहित रासथकाइ मार्न,
स्नानाभिषिक्तयुत देह सुसिक्त पार्न ।
त्यो यामुनेय जलमा जलकेलि गर्न,
पस्ताभए मदनमोहन मोह छर्न ॥
माला थियो सकल गोपिसमूह घृष्ट,
उस्तै थियो र कुचकुङ्कुमले विशिष्ट ।
घुम्थे भुँभू स्वर गरी भमरा उडेर,
गन्धर्वगान सरि कीर्ति निकै छरेर ।
तोडेर मार्ग सब मत्त भई गजेन्द्र,
जे गर्छ सो सब गरे हरिले नरेन्द्र !

❀

सोऽम्भस्यलं युवतिभिः परिषिच्यमानः
प्रेम्णेक्षितः प्रहसतीभिरितस्ततोऽङ्ग ।
वैमानिकैः कुसुमवर्षिभिरीड्यमानो
रेमे स्वयं स्वरतिरत्र गजेन्द्रलीलः ॥

गोपीहरू सब मिली हरिसाथ मस्त,
क्रीडा गरेर जल छरी हरिमा प्रशस्त ।

प्रेमार्द भै सकलले अति भक्तिसाथ,
हेरे उनैतिर सहर्ष कटाक्षसाथ ।
आकाशबाट पनि देवहरू मिलेर,
वर्षा गरे कुसुमको स्तुति नै गरेर ।
सम्पूर्ण पूर्णतम भै पनि फेरि खेल,
खेले स्वयं स्वसँग नै गजराजखेल ॥

❁

ततश्च कृष्णोपवने जलस्थल–
प्रसूनगन्धानिलजुष्टदिक्तटे ।
चचार भृङ्गप्रमदागणावृतो
यथा मदच्युद् द्विरदः करेणुभिः ॥

सकेर लीला जलको क्रमैसँग,
लिएर साथै भ्रमरा सखीसँग ।
थियो नगीचै अति रम्य कानन,
त्यहीँ भयो श्रीहरिको पदार्पण ।
थिए फुलेका नव पुष्प कुड्मल,
चलाइ बास्ना अति नै सुमङ्गल ।
थियो बहेको नव वायु शीतल,
थियो सबै त्यो वन नै सुनिर्मल ।
गरेर लीला नर झैँ स्वयं हरि,
पसे त्यहाँ ती गजराज नै सरी ॥

❁

# ८. तुरीय अवस्था

एवं शशाङ्कांशुविराजिता निशाः
स सत्यकामोऽनुरताबलागणः ।
सिषेव आत्मन्यवरुद्धसौरतः
सर्वाः शरत्काव्यकथारसाश्रयाः ॥

श्रीकृष्णले ती अबलाहरूसित,
खेले निशापूर्ण सुधांशुरञ्जित ।
ती सत्यकामी हरि हुन् परात्पर,
रोकेर खेले खल कामको ज्वर ।
क्रीडा थियो त्यो सब कृष्णाका वश,
थियो शरत्काव्य समानको रस ।
थिएन केही त्यसमा कुभावना,
थियो परब्रह्मसमत्व भावना ॥

❀

यत्पादपङ्कजपरागनिषेवतृप्ता
योगप्रभावविधुता खिलकर्मबन्धाः ।
स्वैरं चरन्ति मुनयोऽपि न नह्यमाना–
स्तस्येच्छयाऽऽत्तवपुषः कुत एव बन्धः ॥

जस्को पदाब्जरजसेवनबाट तृप्त,
हुन्छन् सदैव सब भक्तहरू सुदीप्त ।
पाएर योग जसको सब बन्ध फारी,
जान्छन् मुनीन्द्र सहजै भवसिन्धु पारि ।
ज्ञानीहरू पनि गरी उनकै विचार,
बन्छन् उनै सरह मुक्त र निर्विकार ।
सद्भक्त निम्ति हरि चिन्मय देह लिन्छन्,
यस्ता उनै त कुन बन्धन भित्र हुन्छन् ?

❀

विक्रीडितं व्रजवधूभिरिदञ्च विष्णोः
श्रद्धान्वितोऽनुशृणुयादथ वर्णयेद् यः ।
भक्तिं परां भगवति प्रतिलभ्य कामं
हृद्रोगमाश्वपहिनोत्यचिरेण धीरः ॥

श्रीकृष्णले व्रजवधूसँग रासखेल,
गर्दा भयो अतुल चिन्मय दिव्य मेल ।
खेले गरी सकल इन्द्रिय पूर्ण रुद्ध,
लीला थियो विजय मन्मथका विरुद्ध ॥
श्रद्धा लिएर जसले सब यो चरित्र,
सुन्ला सुनाउँछ भने अति नै विचित्र ।
कामज्वर प्रशम भैकन दिव्य शक्ति,
त्यल्ले परा अतुल पाउँछ कृष्णभक्ति ॥

❀

# ९. अनाहत नाद

अक्षण्वतां फलमिदं न परं विदामः
सख्यः पशूननु विवेशयतोर्वयस्यैः ।
वक्त्रं व्रजेशसुतयोरनुवेणु जुष्टं
यैर्वा निपीतमनुरक्तकटाक्षमोक्षम् ॥

आँखा हुनू सफल यै छ अवश्य जान ।
योदेखि छैन अरु उत्तम वस्तु मान ॥
साथी र दाजुसँग भै पशु ली समस्त ।
पस्छन् हरि क्रमसँगै व्रजभित्र सुस्त ॥
वंशी छ चट्ट मुखमा जसको निवेश ।
हेर्छन् घुमेर हरि दृष्टि दिई विशेष ॥
गोपी यहाँ सहजमा जति छौँ समस्त ।
गर्छौँ खुला अधर पान भएर मस्त ॥

❀

चूतप्रवालबर्हस्तबकोत्पलाब्ज–
मालानुपृक्तपरिधानविचित्रवेषौ ।
मध्ये विरेजतुरलं पशुपालगोष्ठ्यां
रङ्गे यथा नटवरौ क्व च गायमानौ ॥

आम्रादिका नव पलाससँगै सुरम्य ।
नाना थरी सुमनमाल्य भिरेर रम्य ॥
श्रीकृष्णसाथ बलले पहिरी विशेष ।
नानाथरी वसनयुक्त विचित्र वेष ॥

बस्छन् दुवै सकलका बीच फूर्ति साथ ।
फुक्छन् विचित्र मुरली धुन सप्त साथ ॥
हे मित्र ! लाग्दछ दुवै जन दाजुभाइ ।
छन् मञ्चमा नटसरी कि त ? गीत गाई ॥

❀

गोप्यः किमाचरयदं कुशलं स्म वेणु–
दामोदराधरसुधामपि गोपिकानाम् ।
भुङ्क्ते स्वयं यदवशिष्टरसं ह्रदिन्यो
हृष्यत्वचोऽश्रुमुमुचुस्तरवो यथाऽऽर्याः ॥

हे मित्र हो ! कुन सुकर्म गरेर हेर ।
यो वेणुले अधरको रस आज धेर ॥
प्यूँदो छ आज हरिको, सब भाग हाम्रो ।
छाड्दैन रत्तिभर लाग्छ निकै नराम्रो ॥

यो वेणु सिञ्चित गरी ह्रदिनी समस्त ।
छन् दङ्ग पङ्कज दिइ हरिमा प्रशस्त ॥

यी आर्यभूँ रुख गरीकन अश्रुपात ।
अत्यन्त छन् मुदित सम्भिन गै स्वजात ॥

❀

वृन्दावनं सखि भुवो वितनोति कीर्तिं
यद् देवकीसुतपदाम्बुजलब्धलक्ष्मि ।
गोविन्दवेणुमनु मत्तमयूरनृत्यं
प्रेक्ष्याद्रिसान्वपरतान्यसमस्तसत्वम् ॥

वृन्दावनै पनि सखी ! परलोकसम्म ।
फैलाउँदो छ शुभ कीर्ति छ यै अचम्म ॥
श्रीकृष्णका चरणचिह्नित भै अजस्र ।
शोभा बढाउँछ सधैँ यसले सहश्र ॥

श्रीकृष्णले जब चराचर मोहकारी ।
फुक्छन् सुरम्य मुरलीधुन छक्क पारी ॥
नाच्छन् मयुर हरिकासँग भै प्रमत्त ।
छन् पर्वतीय पशु ती धुनसाथ मस्त ॥

❀

धन्याः स्म मूढमतयोऽपि हरिण्य एता
या नन्दनन्दनमुपात्तविचित्रवेषम् ।
आकर्ण्य वेणुरणितं सहकृष्णसाराः
पूजां दधुर्विरचितां प्रणयावलोकैः ॥

ती धन्य छन् हरिणका गृहिणी समस्त ।
मूढै भएर पनि छन् हरि साथ मस्त ॥
ती बाँसुरी धुन सुनीकन कान्तसाथ ।
जान्छन् उनै नगिचमा अति भै सनाथ ॥

प्रेमार्द्र भै नयनले हरितर्फ हेर्छन् ।
पूजा समर्हण सबै क्रमसाथ गर्छन् ॥
हे मित्र हो ! पशु भए पनि धन्य ती छन् ।
श्रीकृष्णमै मन दिई पतिसाथ बस्छन् ॥

❁

कृष्णं निरीक्ष्य वनितोत्सवरूपशीलं
श्रुत्वा च तत्क्वणितवेणुविचित्रगीतम् ।
देव्यो विमानगतयः स्मरनुन्नसारा
भ्रश्यत्प्रसूनकबरा मुमुहुर्विनीव्य ॥

देखेर कृष्ण वनितोत्सवरूपरास ।
साथै सुनेर मुरली धुन गीत खास ॥
नारी विमानभरका मदनाभितप्त ।
खुस्की जुरो वसन छन् सब उग्र शप्त ॥

❁

गावश्च कृष्णमुखनिर्गतवेणुगीत–
पीयूषमुत्तभितकर्णपुटैः पिबन्त्यः ।

शावाः स्नुतस्तनपयः कवलाःस्म तस्थू–
गोंविन्दमात्मनिदृशाश्रुकलाः स्पृशन्त्यः ॥

गाईहरू हरिमुखाश्रित वेणुजात ।
पीयूषझैं पिउँदछन् दुई कानबाट ॥
बाछाहरू स्तन चुसी मुखमै लिएर ।
हेर्छन् मुकुन्दकन आँशुसँगै पिएर ॥

❀

प्रायो बताम्ब विहगा मुनयो वनेऽस्मिन्
कृष्णेक्षितं तदुदितं कलवेणुगीतम् ।
आरुह्य ये द्रुमभुजान् रुचिरप्रवालान्
श्रृण्वन्त्यमीलितदृशो विगतान्यवाचः ॥

यो ठाउँमा सुन सखी ! खगरूपधारी ।
बस्छन् ठुला मुनिहरू वनका विहारी ॥
बस्छन् चढी रुख जहाँ नव पालुवा छन् ।
छोडेर बोल्न अनिमेष ती वेणु सुन्छन् ॥

❀

नद्यस्तदा तदुपधार्य मुकुन्दगीत–
मावर्तलक्षितमनोभवभग्नवेगाः ।
आलिङ्गनस्थगितमूर्मिभुजैर्मुरारे –
र्गृह्णन्ति पादयुगलं कमलोपहाराः ॥

श्रीकृष्णको मधुर वेणु सुनेर छक्क
पर्दै समग्र सरिता अडिएर टक्क ।
पक्रेर पाउ हरिका अति भक्तिसाथ
पूज्छन् लिई कमलपुष्प भई सनाथ ॥

❁

दृष्ट्वाऽऽतपे व्रजपशून् सह रामगोपैः
सञ्चारयन्तमनु वेणुमुदीरयन्तम् ।
प्रेमप्रवृद्ध उदितः कुसुमावलीभिः
सख्युर्व्यधात् स्ववपुषाम्बुद आतपत्रम् ॥

मध्याह्नमा हरिसँगै बल गोपबाल ।
हिँड्छन् फुकेर मुरली धुन मस्त चाल ।
देखेर घर्मपरितप्त उँभो गएर ।
छाया दियो जलदले छतरी भएर ॥
प्रेमार्द्र भै कुसुमझैँ जल ने चढाई ।
आफैँ समर्पित छ बादल जो रमाई ॥

❁

पूर्णाः पुलिन्द्य उरुगायपदाब्जराग–
श्रीकुङ्कुमेन दयितास्तनमण्डितेन ।
तद्दर्शनस्मररुजस्तृणरूषितेन
लिम्पन्त्य आननकुचेषु जहुस्तदाधिम् ॥

यी भिल्लिनी वनचरी पनि कृष्णलाई,
देखेर छन् तृषितझैँ हरि भेट्नलाई ॥
गोपाङ्गनाक्षरित कुम्कुमयुक्त घाँस,
छोएर कृष्ण पदले छ विशुद्ध खास ॥
सोही दली हृदयको स्मर आधिलाई ।
पार्छन् निको वनचरी बिचरी रमाई ॥

❀

हन्तायमद्रिरबला हरिदासवर्यो
यद् रामकृष्ण चरणस्पर्शप्रमोदः ।
मानं तनोति सहगोगणयोस्तयोर्यत्
पानीयसूयवसकन्दरकन्दमूलैः ॥

लौ हेर आज अबला सबले मिलेर ।
यो सौम्य पर्वत छ मस्त सरी फुलेर ॥
यो अद्रि राम हरिका पद चुम्न पाई ।
अत्यन्त नै मुदित भो सँगमा रमाई ॥

यो भाग्यवन्त हरिको अति मुख्य दास ।
गर्दो छ मान सबको नभई उदास ॥
यो दिन्छ घाँस जल औ फल कन्दमूल ।
विश्राम निम्ति छ गुफा लहार छ झूल ॥

❀

गा गोपकैरनुवनं नयतोरुदार–
वेणुस्वनैः कलपदैस्तनुभृत्सु सख्यः ।
अस्पन्दनं गतिमता. पुलकस्तरूणां
निर्योगपाशकृतलक्षणयोर्विचित्रम् ॥

खुट्टे र पाश दुइटै शिरमा लपेटी ।
गाईहरू वनवनै क्रमले लखेटी ॥
हिँड्छन् सँगै हरि र राम ली गोपबाल ।
फुक्तै सुरम्य मुरली धुन मस्त चाल ॥

देखेर जङ्गमहरू जड तुल्य बन्छन् ।
रोमाञ्च भै जडहरू सब चल्न थाल्छन् ॥
हे मित्र हो ! कति गरौँ यसको वयान ।
जादू भनेर मुरलीधुन नित्य जान ॥

❀

# १०. ब्रह्मद्रव

म मान्छु यो सबै असत् तथापि मुस्कुराउँछु ।
म हुन्न होसमा यहाँ म बोल्छु बर्बराउँछु ॥

म भित्र भित्र हो कता अहं लुकेर बोल्दछ ।
विषाक्त भावना सधैँ म भित्र भित्र घोल्दछ ॥

म भित्र कृष्णशर्वरी अझै छ जुर्मुराउँदो ।
छ लोभ लालचा घृणा सदैव नै उदाउँदो ॥

म ठान्छु भित्र भित्र नै छ काम सग्बगाउँदो ।
छ वासना प्रसुप्तझैँ म भित्र मग्मगाउँदो ॥

म देख्छु यो अगाडिको पछाडिको म देख्तिनँ ।
म लेख्छु बाहिरी कुरा म भित्रको म लेख्तिनँ ॥

छ आत्मवञ्चना सधैँ म बाँच्छु वञ्चनासित ।
म भित्र दूर भैसकेँ म भाग्छु मै स्वयंसित ॥

छु लर्कंदो तलै तलै उँभो हुने सबै भुँले ।
म मस्त भै युवा छँदा कता कता डुलेँ ॥

छ चाहना असाध्य नै म ऊ कसो गरी हुने ।
स्व आत्मको प्रकाशमा मिलेर झिल्मिलाउने ॥

विशोक हूँ विमृत्यु हूँ विशुद्ध दिव्य निर्मल ।
वहाँ यहाँ जताततै म मात्र एक सम्बल ॥

भवाटवी समान हो अलीक तुच्छ वैभव ।
म मात्र एक सत्य हूँ असत्य हुन् अरू सब ॥

म पूर्ण हूँ अखण्ड हूँ म एक हूँ अनेक हुँ ।
म ढुक्ढुकी हुँ धड्कने प्रकाशको प्रकाश हुँ ॥

उपाधिशून्य हूँ सबै उपाधिको म कारक ।
म नेति नेति वाच्य हूँ समस्त विश्वधारक ॥

म आदि हूँ अनन्त हूँ अनादि हूँ सनातन ।
समष्टि विश्व बस्छ यो म भित्र नै टनाटन ॥

भ्रमांश दूर भैदिए म भित्र मै छु पाउने ।
अखण्ड सत्त्वमा मिली अहं स्वयं बिलाउने ॥

# ११. अर्को उपाय छैन

अन्वीक्षेतात्मनो बन्धं मोक्षं च ज्ञाननिष्ठया ।
बन्ध इन्द्रियविक्षेपो मोक्ष एषां च संयमः ॥

आफैँभित्र दुवै खोजौं ज्ञानले बन्धमोक्ष नै ।
बन्ध इन्द्रिय विक्षेप मोक्ष संयमबाट नै ॥

सधैँ बाहिर दौडेर आफैंसँग सधैँ लडेँ ।
बाल्यावस्था गयो मेरो युवा प्रौढ हुँदै बढेँ ॥

बार्धक्य छ जराग्रस्त होस छैन अझैतक ।
फर्कने कहिले भित्र सोचिएन अझैतक ॥

शृङ्गाररसमा मेरो अझै छ रस दुच्छर ।
रसराज रसो वै स बुझ्न खोजिन्न खै तर ॥

सातौं दशक नाघेर लाग्नलागेँ उँधोतिर ।
म खोज्दिनँ अझै लाग्न फर्किएर उँभोतिर ॥

एषणा धेर बोकेर भ्रम अध्यासका भर ।
परेर म सधैं घुम्छु चारैतिर निरन्तर ॥

कन्थाहरू सधैं बोकी लेखी गन्थनको कुरो ।
भित्र अन्तरमा पाली अहंको दृढ आँकुरो ॥

कुवाको व्याङभैंm बस्छु विस्तार कसरी हुने ।
अहं घमण्ड बोकेर निस्तार कसरी हुने ॥

तत्त्वमस्यादिको ज्ञान कोबाट कसरी लिने ?
त्यसका लागि सत्पात्र म आफैं कसरी हुने ?

अहं ब्रह्मास्मिको भाव कहिले हो पलाउने ?
यसै दुश्चक्रमा फेरि घुमेर कति आउने ?

बेला सुन्दर हाम्रो हो कुण्ठा त्यागेर सत्त्वर ।
अहं ब्रह्मास्मिको पाठ सिक्न हौं नित्य तत्पर ॥

कालले भोलि भन्दैन सम्झेर कालको क्रम ।
आत्मोद्धार हुनेतर्फ गरौं चाँडै परिश्रम ॥

ज्ञानका मार्गमा लागौं म स्वयं ब्रह्म हूँ भनी ।
यद्गत्वा न निवर्तन्ते मृत्युसंसारवर्त्मनि ॥

भगवद्वाक्य सम्झेर लागोस् हाम्रो त्यतै श्रम ।
यद्गत्वा न निवर्तन्ते तद्धामः परमं मम ॥

कृष्णसर्प अहङ्कार भित्र पालेर दुच्छर ।
बन्दैन कहिल्यै हाम्रो अन्तःकरण सुन्दर ॥

षडुर्मिव्याप्त हो देह जानी माथि उठीकन ।
तटस्थ बस्नु नै पर्छ जीवले साक्षी भैकन ॥

खुला छ ज्ञानको मार्ग यही सार्थक बन्दछ ।
अर्को बाटो कुनै छैन श्रुतिले पनि भन्दछ ॥

❀

# १२. सद्योमुक्ति

पराञ्चि खानि व्यतृणत्स्वयम्भू–<br>
स्तस्मात्पराङ्पश्यति नान्तरात्मन् ।<br>
कश्चिद्धीरः प्रत्यगात्मानमैक्ष–<br>
दावृत्तचक्षुरमृतत्वमिच्छन् ॥

ब्रह्मा रिसाई नयनादिलाई,<br>
दिए जसै बाहिर नै घुमाई ।<br>
मान्छे सधैँ बाहिर हेर्छ खालि,<br>
निष्पट्ट कालो तम भित्र पाली ॥

❀

ज्ञानी कुनै खूब भएर धीर,<br>
विशुद्ध आत्मातिर फर्किएर ।<br>
हेर्ला जसै ऊ पनि बन्छ सोही,<br>
बाहेक ऊ को छ र ? अन्य कोही ॥

फर्केर आफैँतिर चक्षु खोली,<br>
ब्रह्मास्मि भन्ने शुभ मन्त्र बोली ।<br>
जाला कुनै मानिस देह छोडी,<br>
ऊ ब्रह्म बन्ला उससाथ जोडी ॥

यै जन्ममा ज्ञान भयो भने नै,
तर्ने छ मान्छे र हुनेछ जाति ।
तरेन ता त्यो भवसिन्धु भित्रै,
घुम्ने छ बन्दै अति आत्मघाती ॥

देखिन्न आत्मा छ अदृश्य खास,
त्यो बुद्धिमा गर्दछ नित्य वास ।
त्यो हो सधैँ इन्द्रियले अगम्य,
र हुन्छ सम्यक् मनबाट गम्य ॥

ब्रह्मास्मिको भाव लिएर भित्र,
जो बस्तछन् स्वान्त गरी पवित्र ।
ती ब्रह्म हुन् ब्रह्म भएर बस्छन्,
यही कुरा वेदपुराण भन्छन् ॥

ब्रह्मास्मिको भाव लिएर गाढा,
जो बस्छ मिथ्या भवबाट टाढा ।
त्यो मुक्त हो आखिर मुक्त बन्छ,
यही कुरा शाश्वत वेद भन्छ ॥

ब्रह्मास्मिको भाव लिएर खास,
जो बस्छ सारासँग भै उदास ।
प्राणादि हुन्नन् उसका वियुक्त,
मिल्छन् यहीं बन्दछ सद्यमुक्त ॥

# १३. आत्मा

अविद्यायामन्तरे वर्तमानाः
स्वयं धीराः पण्डितम्मन्यमानाः ।
दन्द्रम्यमाणाः परियन्ति मूढाः
अन्धेनैव नीयमाना यथान्धाः ॥

अत्यन्त ठूलो तममा रहेर,
आफैँ बडो पण्डित हूँ भनेर ॥
घुम्छन् सधैँ ती शठ भै अनित्य,
अन्धोसँगै अन्ध समान नित्य ॥

धनै बडो हो सरि नित्य ठान्ने,
वेदान्त विज्ञान कुनै नजान्ने ।
अनित्यलाई जुन नित्य मान्छ,
घुमी घुमी त्यो यमलोक जान्छ ॥

अनित्यले नित्य कदापि हात,
लाग्दैन भन्छन् तर युक्ति साथ ।
वेदान्तको ज्ञान गरे त नित्य,
अनित्यबाटै पनि मिल्छ नित्य ॥

आत्मा सधैँ बस्तछ बुद्धिभित्र,
गैह्रो गुफाभित्र लुकी विचित्र ।
दुदर्श हो तै पनि युक्ति साथ,
गर्‍यौँ भने चिन्तन लाग्छ हात ॥

सानो छ आत्मा अति सूक्ष्म सार,
ब्रह्माण्डभन्दा छ ठूलो अपार ।
यो बुद्धिको भित्र गएर बस्छ,
दुर्दर्श हो प्राज्ञ अवश्य देख्छ ॥

अनित्य संसार अनित्य देह,
अनित्य दारा सुत वित्त गेह ।
अनित्य चारैतिर छन् अनेक,
अनित्यका भित्र छ नित्य एक ॥

न वेदले मिल्दछ गूढ आत्मा,
न बुद्धिले मिल्छ अचिन्त्य आत्मा ।
पढेर धेरै न त मिल्छ आत्मा,
आत्मैकृपाबाट छ लभ्य आत्मा ॥

# १४. मुक्ति

अशोष र विशेषादि गुणका ध्वंसले पनि ।
खुल्दैन मुक्तिको ढोका कणभुक्ले भने पनि ॥

दीपनिर्वाण होस् यद्वा क्लेश नाश भए पनि ।
अभाव मुक्ति नै हुन्न जति तर्क दिए पनि ॥

असत्बाट कहीँ कैल्यै जन्मिन्न सत्य वस्तुतः ।
शून्यवादी असद्वादी ती हुन् खोक्रा अवस्तुतः ॥

ठाउँ हेरेर जो बोल्छन् स्याद्वादी जैन ती पनि ।
आफैं नै स्पष्ट ती छैनन् घुमेका छन् भ्रमी बनी ॥

मीमांसकहरू ज्यादा स्वर्गकामी बनीकन ।
स्वाहा आफ्नू सबै गर्छन् ध्वाँसे पारेर नै मन ॥

पुण्य पाप समानै हो अस्थायी त्यसको फल ।
आखिरी फर्कनै पर्छ पुण्य भोग गरी तल ॥

भक्तिको फल हो मुक्ति तर भक्तहरू पनि ।
मुक्तिलाई गरी गालि घुम्दछन् नित्य फन्फनी ॥

जति छन् पन्थ या वाद बुझ्न अत्यन्त दुष्कर ।
ज्ञानको मार्ग मात्रै हो सजिलो अति सुन्दर ॥

मुक्ति हुन्न विनाज्ञान ज्ञानकारण बन्दछ ।
"ऋते ज्ञानान्नमुक्तिः" नै वेदले पनि भन्दछ ॥

❀

किमात्मनानेन जहाति योऽन्ततः
किं रिक्थहारैः स्वजनाख्यदस्युभिः ।
किं जायया संसृतिहेतुभूतया
मर्त्यस्य गेहैः किमिहायुषो व्ययः ॥

शरीर मिथ्या छुटिहाल्छ अन्ततः,
स्वबन्धु डाका धनलुट्न चिन्तित ।
स्त्री हुन् सधैँ संसृतिबन्धकारक,
गेहादि हुन् यी सब आयुहारक ॥

❀

# १५. ब्रह्मोपदेश

त्वयोदितं व्यक्तमविप्रलब्धं
भर्तुः स मे स्याद् यदि वीर भारः ।
गन्तुर्यदि स्यात् अधिगम्यमध्वा
पीवेति राशौ न विदां विबादः ॥

राजन् ! भन्यौ जे सब सत्य मान्छु,
भारी भए बोक्तछ देह ठान्छु ॥
हिँड्ने भनेको पनि देहले हो,
मोटोपना भूतसमूह नै हो ॥
बोक्ने कुरा यी सब राख याद,
गर्दैन विद्वान् यसमा विवाद ॥

❀

स्थौल्यं कार्श्यं व्याधय आधयश्च
क्षुत्तृड्भयं कलिरिच्छा जरा च ।
निद्रा रतिर्मन्युरहंमदः शुचो
देहेन जातस्य हि मे न सन्ति ॥

मोटो र दुब्लो भय दुःख शोक,
बुढ्याइँ तिर्खा अनि कष्ट भोक ॥
निद्रा अहं क्रोध सँगै पियार,
यी देहका हुन्, म हुँ निर्विकार ॥

❀

जीवन्मृतत्वं नियमेन राजन्
आद्यन्तवद्यद्विकृतस्य दृष्टम् ।
स्वस्वाम्यभावो ध्रुव ईड्य यत्र
तर्ह्युच्यतेऽसौ विधिकृत्ययोगः ॥

बाँच्ने र मर्ने सब यो विधान,
विकार हो षड्विध भूप ! जान ॥
आद्यन्त छन् मालिकदासभाव,
स्थायित्व देखिन्छ यहाँ अभाव ॥

❀

विशेषबुद्धेर्विवरं मनाक् च
पश्याम यन्न व्यवहारतोऽन्यत् ।
क ईश्वरस्तत्र किमीशितव्यं
तथापि राजन् करवाम किं ते ॥

यथार्थमा मालिक दास भेद,
कहाँ छ साँच्चै सब यो विभेद ॥

असत्य हो यो सब के भनौँ ? म,
तथापि राजन् ! भन के गरौँ ? म ॥

❀

उन्मत्तमत्तजडवत्स्वसंस्था
गतस्य मे वीर चिकित्सितेन ।
अर्थः कियान् भवता शिक्षितेन
स्तब्धप्रमत्तस्य च पिष्टपेष ॥

उन्मत्तझैँ मस्त भएर हिँड्छु,
सधैँ म आफ्नै पनमा रहन्छु ।
आत्मा म हुँ छैन विकार घाउ,
गर्छौ चिकित्सा कसको बताऊ ॥
विकारमा औषधि लाउँछौ के ?
पीठो पिँधी आखिर पाउँछौ के ?

❀

अकोविदः कोविद वादवादान्
वदस्यथो नातिविदां वरिष्ठः ।
न सूरयो हि व्यवहारमेनं
तत्त्वावमर्शेन सहामनन्ति ॥

अल्पज्ञ हौ तै पनि विज्ञ जस्तै,
गर्छौ तिमी तर्कहरू प्रशस्तै ।

जहाँ कुनै तात्त्विक अर्थ छैन,
तत्त्वज्ञ यस्मा रुचि नै लिँदैन ॥

द्रव्यस्वभावाशयकर्मकालैरे–
कादशामी मनसो विकाराः ।
सहस्रशः शतशः कोटिशश्च
क्षेत्रज्ञतो न मिथो न स्वतःस्युः ॥

यो वृत्ति ता हो मनको विकार,
द्रव्यस्वभावाशयकर्म काल ।
द्वारा भई वृद्धि असङ्ख्य टम्म,
बढेर यो जान्छ अनन्तसम्म ॥
यो वृत्ति एक्लै न मिलेर बढ्छ,
क्षेत्रज्ञ आधार मिलेर बढ्छ ॥

रहूगणैतत्तपसा न याति
न चेज्यया निर्वपणात् गृहाद्वा ।
नच्छन्दसा नैव जलाग्नि सूर्यै–
र्विना महत्पादरजोऽभिषेकम् ॥

धूलो बडाका पदको लिएर,
नुहाउँदैनौ जबसम्म हेर ?
राजन् ! महान् वैदिक यज्ञ कर्म,
स्वाध्याय पूजा तप दान धर्म ।
जस्तोसुकै जे गर पुण्य काम,
यी बन्दछन् व्यर्थ सबै बिकाम ॥

❁

यत्रोत्रमश्लोकगुणानुवादः
प्रस्तूयते ग्राम्यकथाविघातः ।
निषेव्यमाणोऽनुदिनं मुमुक्षो–
र्मतिं सतिं यच्छति वासुदेवे ॥

जहाँ सधैं कीर्तन गान हुन्छ,
दुस्सङ्ग यल्ले सब साफ धुन्छ ।
मुमुक्षुमा निर्मल भक्ति जाग्छ,
विशुद्ध बुद्धि प्रभुतर्फ लाग्छ ॥

❁

# १६. इच्छा

अहो ! अमीषां किमकारि शोभनं
प्रसन्न एषां स्विदुत स्वयं हरिः ।
यैर्जन्म लब्धं नृषु भारताजिरे
मुकुन्दसेवौपयिकं स्पृहा हि नः ॥

मान्छेहरू यी कुन पुण्यले गरी,
सौभाग्यले या खुश भै स्वयं हरि ।
यी जन्मिए भारत वर्षमा गई,
श्रीकृष्णसेवारत भक्त नै भई ।
यो भाग्यको लागि त देवतै पनि,
गर्छौं सदिच्छा अति दीनझैँ बनी ॥

न यत्र वैकुण्ठकथासुधापगा
न साधवो भागवतास्तदाश्रयाः ।
न यत्र यज्ञेशमखा महोत्सवाः
सुरेशलोकोऽपि न वै स सेव्यताम् ॥

जहाँ हुँदैनन् हरिकीर्तिवर्णन,
जहाँ हुँदैनन् हरिभक्त सज्जन ॥
जहाँ हुँदैनन् हरियज्ञ उत्सव,
ती ब्रह्मलोकै पनि तुच्छ हुन् सब ॥

❀

नैवात्मनः प्रभुरयं निजलाभपूर्णो
मानं जनादविदुषः करुणो वृणीते ।
यद् यज्जनो भगवते विदधीत मानं
तच्चात्मने प्रतिमुखस्य यथा मुखश्रीः ॥

सन्तुष्ट छन् प्रभु सधैँ निजलाभबाट,
चाहिन्न मानमनितो जन अज्ञबाट ।
जो गर्दछन् भजन कीर्तन पूजनादि,
स्वीकार्दछन् सदय भै प्रभु ती अनादि ॥

जो मान गर्छ हरिको अति भक्ति राखी,
ऊ मान गर्छ उसकै द्विविधा नराखी ।
शृङ्गार साथ जसरी मुख हेर्छ कोही,
देखिन्छ दर्पणहुँदो अति दिव्य सोही ॥

❀

# १७. वैराग्य

जिह्वैकतोऽच्युत विकर्षति मावितृप्ता
शिश्नोऽन्यतस्त्वगुदरं श्रवणं कुतश्चित् ।
घ्राणोऽन्यतश्चपलदृक् क्व च कर्मशक्ति–
र्बह्व्यः सपत्न्य इव गेहपत्तिं लुनन्ति ॥

जिब्रो अतृप्त अति भै रसतर्फ तान्छ ।
कामार्त शिश्न अनि मैथुन तर्फ जान्छ ॥
छाला सुकोमल छुने तिर, पेट खान ।
यो कान सङ्गीततिरै बल गर्छ जान ॥
यो नाक सुघ्न बल गर्छ सुगन्धलाई ।
सौन्दर्यमा नयन तान्छ सधैँ मलाई ॥
कर्मेन्द्रियादि जति छन् सब वाण हान्छन् ।
आफ्ना सबै विषयतर्फ खिचेर लान्छन् ॥
हे नाथ ! दिक्क म छु धेर छु आज खिन्न ।
तानेर यी सकलले म छु छिन्नभिन्न ॥
सम्पूर्ण यी विषय नित्य मलाई खान्छन् ।
सौताहरू त जसरी पतिलाई तान्छन् ॥

यन्मैथुनादि गृहमेधिसुखं हि तुच्छं
कण्डूयनेन करयोरिव दुःखदुःखम् ।
तृप्यन्ति नेह कृपणा बहुदुःखभाजः
कण्डूतिवन्मनसिजं विषहेत धीरः ॥

कामी गृहस्थजन मैथुन आदि काम ।
ठान्दैन तुच्छ तर ठान्दछ सौख्यधाम ॥
यो दुःख हो सब लुतोसरिको चिलाई ।
खोस्म्रो जहाँ उति चिलाउँछ झन् भबाई ॥
त्यो अज्ञ हो अबुझ जो छ गृहानुसक्त ।
डुब्दो सधैँ विषयभित्र भएर रक्त ॥
ज्ञानीहरू मदन या विषयादिलाई ।
बस्छन् लुतोसरि गनी पर नै हटाई ॥

तत्सम्भवः कविरतोऽन्यदपश्यमान–
स्त्वां बीजमात्मनि ततं स्वबहिर्विचिन्त्यः ।
नाविन्ददब्दशतमप्सु निमज्जमानो
जातेऽङ्कुरे कथमु होपलभेत बीजम् ॥

जन्मे जहाँ कवि अरू जन नै नदेखी
आफैँ तिमी विजन हौ तर बाह्यदेखी ।
खोजे पसेर जलमा सय वर्षसम्म
निस्क्यो टुसो विजन मिल्छ कहाँ अचम्म ?

# १८. चतुर्थ आश्रम

प्रबलानिलवेगवेल्लितध्वजचीनांशुककोटिचञ्चले ।
अपि मूढमतिः कलेवरे कुरुते कः स्थिरबुद्धिमम्बिके ॥

अति दुर्जयवायुवेगले कपडाको ध्वज काम्छ थर्थर ।
ध्वज नै सरि देह अम्बिके ! क्षणमै जान्छ भएर जर्जर ॥

कतिनाम सुता नलालिताः कति वा नेह बधूरभुञ्जिहि ।
क्व नु ते क्व च ताः क्व वा वयं भवसङ्गः खलु पान्थसङ्गमः ॥

कति पुत्र पियार गर्नुभो कति वा पुत्रवधू पसे घर ।
अब अम्ब ! कहाँ गए तिनी सब हुन् पान्थसमान अस्थिर ॥

भ्रमतां भववर्त्मनि भ्रमात् न हि किञ्चित् सुखमम्ब लक्ष्यये ।
तदवाप्यचतुर्थमाश्रमं प्रयतिष्ये भवबन्धमुक्तये ॥

भ्रमले भवमा बनी भ्रमी घुमिरेछौं भयले ससम्भ्रम ।
सुख छैन यहाँ कहीं कतै सब संसार रहेछ यो भ्रम ।
भवको भय हर्न अम्बिके ! दिनुहोस् जान चतुर्थ आश्रम ॥

# १९. आँखा खोल

जन्म दुःखं जरा दुःखं मृत्युर्दुःखं पुनः पुनः ।
संसारसागरो दुःखं तस्माज्जाग्रत जाग्रतः ॥

जन्म दुःख जरा दुःख मृत्यु दुःख सधैँ भरि ।
संसारसिन्धु हो दुःख आँखा खोल छिटो गरी ॥

❀

शुद्धोऽसि बुद्धोऽसि निरञ्जनोऽसि
संसारमायापरिवर्जितोऽसि ।
संसारस्वप्नं त्यज मोहनिद्रां
मदालसा वाक्यमुवाच पुत्रम् ॥

छौ शुद्ध छौ बुद्ध र रागमुक्त,
संसारको सम्भ्रमले वियुक्त ।
संसार हो स्वप्न भनेर ठान,
मदालसाको उपदेश जान ॥

❀

# २०. त्यो गुरु हुँदैन

आजन्ममात्रमपि येन शठेन किञ्चित्
चित्तं विधाय शुकशास्त्रकथा न पीता ।
चाण्डालवच्च खरवद्वत तेन नीतं
मिथ्या स्वजन्म जननीजनिदुःखभाजा ॥

जल्ले समस्त जनमै भरि एक चित्त,
पारेर भागवततर्फ भई प्रवृत्त ।
गर्दैन भक्तिरसपान भने त जन्म,
उस्को भयो श्वपच या खर झैँ कुजन्म ।
त्यो हो कृतघ्न जननीवयको कुठार,
या हो कि ! मात्र जननी मलको विकार ॥

देहेऽस्थिमांसरुधिरेऽभिमतिं त्यज त्वं ॥
जायासुतादिषु सदा ममता विमुञ्च
पश्यानिशं जगदिदं क्षणभङ्गनिष्ठं
वैराग्यरागरसिको भव भक्तिनिष्ठः ॥

यो देह हो फगत मासु र रक्तहाड,
पत्नी स्वयं र सुतमा पनि राग छाड ।
संसार यो क्षणिक हो ममता नराख,
वैराग्य साथ हरिमा अति भक्ति राख ॥

❀

धर्मं भजस्व सततं त्यज लोकधर्मान्
सेवस्व साधुपुरुषाञ्जहि कामतृष्णाम् ।
अन्यस्य दोषगुणचिन्तनामासु मुक्त्वा
सेवाकथारसमयो नितरां पिब त्वम् ॥

सद्धर्ममा मन दिई त्यज लोकधर्म
सत्सङ्गमा बढ र छोड असत्य कर्म ।
अन्यत्र दोषगुणचिन्तन हेय जान
सेवाकथारस तिमी गर नित्य पान ॥

❀

नृदेहमाद्यं सुलभं सुदुर्लभम्
प्लवं सुकल्पं गुरुकर्णधारम् ।
मयानुकूलेन नभस्वतेरिता
पुमान् भवाब्धिं न तरेत् स आत्महा ॥

नृदेह हो दुर्लभ पाइने यो,
डुँगा छ राम्रो गुरुकर्णधार ।

म दाहिने भै जब दिन्छु साथ,

त्यो आत्महा हो नतरे त पार ॥

गुरुर्न सस्यात्स्वजनो न स स्यात्

पिता न स स्याज्जननी न सा स्यात् ।

दैवं न तत्स्यान्न पतिश्च स स्यान्

न मोचयेद्यः समुपेतमृत्युम् ॥

ती ता हुँदैनन् गुरु बन्धु सारा

मातापिता या स्वजनै सहारा ।

द्यौता हउन् वा पति हुन् अवश्य

हुँदैन मृत्यु जसबाट वश्य ॥

# २१. कृष्णं वन्दे जगद्गुरुम्

कालो मैलो तममय निशा ध्वस्त पारेर सारा ।
झुल्क्यो यौटा चमचम गरी सृष्टिको दिव्य धारा ॥
हेर्दाहेर्दै क्रमसँग बढी फैलियो चंचमाई ।
भागे टाढा खल दनुज ती थर्थराई डराई ॥

जैलेजैले यस भुवनमा बढ्छ अन्याय ताप ।
सोही आफैं अवतरित भै गर्छ सारा सखाप ॥
कालो भन्छौं तदपि छ सधैं सत्त्वको पूर्ण अंश ।
त्यो हो साक्षी चरअचरको वृष्णिवंशावतंश ॥

जन्म्यो सोही अजन जनमा कृष्णको नामबाट ।
खेल्दाखेल्दै शिशुवय गयो स्वच्छ मैदान फाँट ॥
बिस्तारै नै अघि अघि बढी दुष्ट सम्पूर्ण फाँडी ।
लाग्यो आफ्नू स्वपदतिर नै मृत्युसंसार छाडी ॥

❁

श्रीगोविन्दपदारविन्दमकरन्दास्वादशुद्धाशयाः
संसाराम्बुधिमुत्तरन्ति सहसा पश्यन्ति पूर्णं महः ।

वेदान्तैरवधारयन्ति परमं श्रेयस्त्यजन्ति भ्रमं
द्वैतं स्वप्नसमं विदन्ति विमलां विन्दन्ति चानन्दताम् ॥

श्रीगोविन्दपदारविन्दमधुका आस्वादले ध्वै मन ।
तर्छन् यो भवसिन्धुबाट सजिलै देख्छन् परं कञ्चन ॥
वेदान्तै पनि बुझ्दछन् सहजमा छोडेर सारा भ्रम ।
द्वैतस्वप्न समान सम्झन गई बढ्नेछ शान्ति क्रम ॥

❁

कुर्वन्ति कोऽपि कृतिनः क्वचिदप्यनन्ते
स्वान्तं विधाय विषयान्तरशान्तिमेव ।
त्वत्पादमद्मविगलन्मकरन्दबिन्दु–
मास्वाद्यमाद्यति मुहुर्मधुभिन्मनो मे ॥

गर्छन् कुनै बुध यहाँ प्रभुमा विशेष,
राखेर भित्र मनमा नित शान्ति शेष ।
तिम्रा दुवै कमलझैँ पदबाट झर्दो,
चाखेर नै मह भयो मन मत्त मेरो ॥

❁

पराकृतनमद्बन्धं परं ब्रह्म नराकृति ।
सौन्दर्यसार सर्वस्वं वन्दे नन्दात्मजं महः ॥

सौन्दर्यसारसर्वस्व मान्छेको रूप लीकन ।
जन्मियौ नन्दका पुत्र भएर नन्दनन्दन !
काटिद्यौ हे प्रभो ! मेरा यी सारा भवबन्धन ।
हे ब्रह्म ! म सधैँ गर्छु म तिम्रो अभिवन्दन ॥

❀

यद्भक्तिं न विना मुक्तिर्यः सेव्यः सर्वयोगिनाम् ।
तं वन्दे परमानन्दघनं श्रीनन्दनन्दनम् ॥

जस्को भक्तिबिना मुक्ति हुँदैन यो बुझीकन ।
योगीहरू सधैँ गर्छन् जस्को सेवा र कीर्तन ॥
त्यस्ता परम आनन्दघन श्रीनन्दनन्दन–
लाई अत्यन्त भक्तिले म गर्छु अभिनन्दन ॥

❀

वंशीविभूषितकरान्नवनीरदाभात्
पीताम्बरादरुणबिम्बफलाधरोष्ठात् ।
पुर्णेन्दुसुन्दरमुखादरविन्दनेत्रात्
कृष्णात्परंकिमपितत्वमहंनजाने ॥

वंशीसुशोभित छ हात अति प्रशस्तै,
नीलो छ वर्ण जलवाहक मेघ जस्तै ।
छन् वस्त्र पीत जसका अनि ओठ लाल,
पुर्णेन्दु झैँ वदन झलमल रम्य भाल ।

आँखा दुवै कमल झैँ अति नै सुरम्य,
यै कृष्ण तत्त्व छ परात्पर सर्वगम्य ॥

❀

ध्यानाभ्यासवशीकृतेन मनसा तन्निर्गुणं निष्क्रियम्
ज्योतिः किञ्चन योगिनो यदि परं पश्यन्ति पश्यन्तु ते ।
अस्माकं तु तदेव लोचनचमत्काराय भूयाच्चिरम्
कालिन्दीपुलिनोदरे किमपि यन्नीलं महो धावति ॥

ध्यानाभ्यास गरेर शुद्ध मनमा ज्योति परं ब्रह्मको
कोही दर्शन पाउँछन् यदि भने पाउन् म मान्छु निको ।
मेरा लागि त लभ्य होस् पछि तकै आभा उही हर्दम
कालिन्दीतटभित्र घुम्दछ कुनै नीलो प्रभा चम्चम ॥

❀

## २२. सङ्क्षिप्त भागवत

ज्ञानं परमगुह्यं मे यद् विज्ञानसमन्वितम् ।
सरहस्यं तदङ्गञ्च गृहाण गदितं मया ॥

ज्ञानविज्ञानले युक्त मेरो यो ज्ञान हो जुन ।
तिमीलाई म भन्दैछु लेऊ शान्त भई सुन ॥

❁

यावानहं यथाभावो यद्रूपगुणकर्मकः ।
तथैव तत्त्वविज्ञानमस्तु ते मदनुग्रहात् ॥

मेरो विस्तार लीलादि गुण रूप र लक्षण ।
कृपाका साथ भन्दैछु तिमी सम्झ प्रतिक्षण ॥

❁

अहमेवासमेवाग्रे नान्यद् यत् सदसत्परम् ।
पश्चादहं यदेतच्च योऽवशिष्येत सोऽस्म्यहम् ॥

ममात्रै नै थिएँ पैले थिएनन् सदसत्परः ।
अहिले पनि मै नै छु पछाडि पनि मै तर ॥

❁

ऋतेऽर्थं यत् प्रतीयेत न प्रतीयेत चात्मनि ।
तद्विद्यादात्मनो मायां यथाऽऽभासो यथा तमः ॥

नभए पनि देखिन्छ देखिँदैन भए पनि ।
देखिन्छ सब माया नै आभास तम झैँ बनी ॥

❀

यथा महान्ति भूतानि भूतेषूच्चावचेष्वनु ।
प्रविष्टान्यप्रविष्टानि तथा तेषु न तेष्वहम् ॥

सम्पूर्ण भूतप्राणीमा पसेको छु र छैन म ।
ममा छैनन् कुनै वस्तु सबैमा तर टम्म म ॥

❀

एतावदेव जिज्ञास्यं तत्त्वजिज्ञासुनाऽऽत्मनः ।
अन्वयव्यतिरेकाभ्यां यत् स्यात् सर्वत्र सर्वदा ॥

तत्त्वजिज्ञासुले यत्ति बुझ्नु पर्दछ तत्त्वतः ।
अन्वयव्यतिरेकैले बुझिन्छ ब्रह्म वस्तुतः ॥

❀

एतन्मतं समातिष्ठ परमेण समाधिना ।
भवान् कल्पविकल्पेषु न विमुह्यति कर्हिचित् ॥

हे ब्रह्मन् ! बुझ यो मेरो उपदेश भई स्थिर ।
मोह कैल्यै हुने छैन गर सृष्टि निरन्तर ॥

❀

# २३. सिद्ध

देहञ्च तन्न चरमः स्थितमुत्थितं वा
सिद्धो विपश्यति यतोऽध्यगमत्स्वरूपम् ।
दैवादुपेतमथ दैववशादपेतं
वासो यथा परिकृतं मदिरा मदान्धः ॥

पुग्छन् जसै चरममा मुनि मौन बन्छन्
देहक्रियादि सब झूठ भनेर गन्छन् ।
आफ्नै स्वरूपसँग मस्त बनी रमाई
बस्छन् पियक्कडसरी सुध नै हराई ॥

देहोऽपि दैववशगः खलु कर्म यावत्
स्वारम्भकं प्रतिसमीक्षत एव सासुः ।
तं सप्रपञ्चमधिरूढसमाधियोगः
स्वाप्नं पुनर्न भजते प्रतिबुद्धवस्तुः ॥

भोग्दै सबै नियतिलभ्य बनी उदास
बाँच्छन् समीक्षण गरीकन काल खास ।
स्त्रीपुत्र आदि सब नश्वर हुन् भनेर
बस्छन् तटस्थसरि यो सपना गनेर ॥

# २४. समय छँदै शोचौँ

यावत्स्वस्थमिदं शरीरमरुजं यावज्जरादूरतः ।
यावच्चेन्द्रियशक्तिरप्रतिहता यावत्क्षयो नायुषः ॥
आत्मश्रेयसि तावदेव विदुषा कार्यः प्रयत्नो महान् ।
सन्दीप्ते भवने तु कूपखननं प्रत्युद्यमः कीदृशः ॥

जैलेसम्म रहन्छ शक्ति तनमा उत्साह राखी अति ।
सक्तैमा गरिहाल्नु पर्दछ सबै सत्कर्म गर्ने जति ॥
बिस्तारै सकिएर शक्ति तनको उत्साह जाला जब ।
केही गर्न सकिन्न हुन्छ पछुतो बेकार होला सब ॥

❀

# २५. मुक्तिको बाटो

वरदान भनौ यद्वा यद्वा यो अभिशाप हो ।
यद्वा हो धर्मको पुञ्ज यद्वा यो मात्र पाप हो ॥

वरदान अभिशाप यो दुवै हुनसक्तछ ।
कल्लाई कसले कस्तो कुन मार्ग लगाउँछ ॥

नरयोनि उसैलाई बन्छ यो अति सुन्दर ।
उपयोग यहाँ जल्ले गर्छ सन्मार्गका तिर ॥

वरदान छ जानेमा नजाने अभिशाप हो ।
नरयोनि दुवैतर्फ जाने यो राजमार्ग हो ॥

जानेदेखिन् यही बन्छ स्वर्गको द्वार सुन्दर ।
नजानेमा यही बन्छ कुम्भिपाक भयङ्कर ॥

जानेमा मुक्तिको बाटो नजाने कुम्भिपाक हो ।
नरयोनि त हाम्रो यो कर्मको नै विपाक हो ॥

# २६. अब लौ उठौँ

बेहोसैमा सब वय गयो होस केही नपाई ।
कुद्दा कुद्दै समय सकियो क्षुद्रमा नै रमाई ॥
छोराछोरी गृह र गृहिणी बन्धु भन्दै हराई ।
अन्धो जस्तै सम विषममा हिँड्दछौँ या डराई ॥

हाम्रो सारा समय सकियो स्वार्थमा मुस्कुराई ।
आफ्ना भन्थ्यौँ स्वजन जति छन् ती रहेछन् पराई ॥
बिर्सी सारा विगत अबता स्वच्छ भै जुर्मुराई ।
जागौँ लागौँ सुकृत पथमा मोह हुस्सु भगाई ॥

के हेर्दैछौँ अझ पनि हरे ! अर्थमा लुब्ध बन्दै ।
यद्वा बाच्छौँ सुझबुझ विना कालको चाल गन्दै ॥
छोडी सारा लटपटहरू शान्ति सन्मार्गगामी ।
बन्दै लागौँ शुभद पथमा सत्य सद्धर्म थामी ॥

फ्याँकी सारा भ्रम कुहक यी ब्रह्ममा वृत्ति जोडी ।
उठ्द्यू चाँडै म अनि ममका तुच्छ जञ्जाल तोडी ॥
कल्ले रोक्ने सरल मनको ज्वार जाज्वल्य वंश ।
कल्ले छेक्ने दहर तहको शुद्ध चैतन्य अंश ॥

यो धर्तीमा नर जुनि लिई जन्मने भाग्य पायौँ ।
भाग्यैद्वारा सुकृतपथको पान्थ भै आज आयौँ ॥
हिँड्दा हिँड्दै समयतिर वा ध्यान हाम्रो गएन ।
यद्वा हाम्रो यस विषयमा ज्ञान राम्रो भएन ॥

छन् धेरै नै सम विषयमका मार्ग नाना अनेक ।
यौटै मात्रै अभय पथ हो ब्रह्मको ज्ञान एक ॥
तस्मात् चाँडै सुझबुझ लिई ज्ञानका तर्फ लागौँ ।
सुस्ती छोडी अब त सब हे ! जुर्मुराएर जागौँ ॥

## २७. दुर्गास्तवन

दुर्गेदेवि ! जगन्माता तिमीलाई नमोनमः ।
अन्तःकरणका मेरा हट्‌न् सारा अहं मम ॥
(१)

अन्धकार बढेको छ । अज्ञान छ जतातत‍ै ।
जूनकीरीसरी ज्योति देखिइन्छ कतैकतै ॥
(२)

महिषासुरको सेना निशुम्भ शुम्भका सँग ।
मिलेर अघि बढ्‌दैछ लुट्न राष्ट्र मजासँग ॥
(३)

आज मन्दिरका घण्टा बज्दैनन् मौन छन् सब ।
क्रमैले पछि पर्दैछ हाम्रो राष्ट्रिय गौरव ॥
(४)

हे दुर्गे ! अब द्यौ बुद्धि जन नेताहरूकन ।
दुष्टता नग्नता छोडी यी बनून् सब सज्जन ॥
(५)

लागेर स्वार्थमा नेता राष्ट्र चौपट्ट भै सक्यो ।
बिस्तारै अब यो राष्ट्र खाल्टा तर्फ गई सक्यो ॥
(६)

नेता छैनन् कुनै राम्रा किन यस्तो भयो यहाँ ?
लूटेराहरूको राज्य देखिइन्छ जहाँ तहाँ ॥
(७)

यस्तोमा कसरी अम्बे ! राष्ट्रले पार पाउने ।
कसरी देशको डुङ्गा कल्ले पार लगाउने ॥
(८)

आऊ हे जननी आऊ बचाऊ राष्ट्र सत्त्वर ।
नत्र ता डुब्छ यो राष्ट्र तिम्रै छ आखिरी भर ॥
(९)

# २८. नारायणस्तुति

योऽस्योऽप्रेक्षक आदिमध्यनिधने योऽव्यक्तजीवेश्वरो
य: सृष्ट्वेदमनुप्रविश्य ऋषिणा चक्रे पुरः शास्ति ताः ।
यं सम्पद्य जहात्यजामनुशयी सुप्तः कुलायं यथा
तं कैवल्यनिरस्तयोनिमभयं ध्यायेदजस्रं हरिम् ॥

हे राजन् ! जुन विश्वको सिरजना सङ्कल्पले गर्दछन् ।
पैलो मध्य र अन्त्यसम्म सबमा ढाकेर नै बस्तछन् ॥
स्वामी हुन् जननी र जीव दुइकै, सृष्टि गरी यो सब ।
पस्छन् साक्ष्य भएर भित्र सबमा भै देहको वैभव ॥

लिन्छन् पूर्ण अधीन, यो जीव पनि बिर्सेर सारा भव ।
पाई पूर्ण सुषुप्ति निर्भय बनी सुत्ने न ली क्यै तब ॥
पाई आश्रय नाथको स्वतनुको छोडेर वास्ता पनि ।
मायाबाट हटेर यो अनुशयी बस्ने भई निर्गुणी ॥

ती हुन् केवल शुद्ध चिन्मय उनै संवेद्य विश्वात्मक ।
जस्मा कारण कार्य या प्रकृतिको देखिन्न केही हक ॥
सारा कारण कार्यदेखि पर भै भीति नहुने स्थल ।
गर्नै पर्दछ चिन्तना सकलले त्यै तत्त्वको हर्पल ॥

❀

# लेखकका
# ज्ञान र भक्ति सम्बन्धी
# प्रकाशित ग्रन्थहरू

१. ज्ञान र भक्ति – २०६३
२. रासपञ्चाध्यायी – २०६४
३. तीर्थहरूको यात्रावृत्तान्त – २०६४
४. ब्रह्मसाक्षात्कार – २०६५
५. उपनिषत्सार – २०६७
६. ब्रह्मसूत्रसार – २०६७
७. मणिरत्नमालाप्रश्नोत्तरीको अनुवाद – २०६७
८. ब्रह्मसूत्रको अध्यास र चतु:सूत्री – २०६८
९. वेदान्तपरिभाषासार – २०६८
१०. अद्वैतसिद्धिः (१) नेपाली अनुवाद सहित – २०६९
११. परमसत्य – २०६९
१२. श्रीकृष्णाय वयन्नुमः – २०६९